| | | |
|---|---|---|
| नाटक | : | हेत्छाकुप्पा |
| विधा | : | मुन्दुम |
| नाटककार | : | प्रवीण पुमा |
| सम्पादक | : | परशुराम राई |
| शुद्धाशुद्धि | : | वसन्तराज अज्ञात |
| फन्ट | : | सगरमाथा |
| टङ्कन | : | लक्ष्मी राई |
| ले-आउट | : | प्रवीण पुमा |
| आवरण कल्पना | : | प्रवीण पुमा |
| आवरण सज्जा | : | अकलसिं पाखीन |
| प्रकाशक | : | सुम्निमा थिएटर एकेडेमी<br>ललितपुर-१४, जुपिटर टोल, नेपाल ।<br>९७७-९८४१२४५५४८ |
| | : | sumnimatheatre@gmail.com |
| सर्वाधिकार | : | नाटककारमा |
| प्रथम संस्करण | : | ५०६९ य.दो./२०६६ वि.सं./२००९ इ.सं. |
| दोस्रो संस्करण | : | ५०८३ य.दो./२०८० वि.सं./२०२३ इ.सं. |
| पेपर मूल्य | : | रु.३६०।- (विदेशमा US $ : 3.50) |
| इ-पेपर मूल्य | : | रु.१६०।- (विदेशमा US $ : 1.50) |

TU CENTRAL LIBRARY OF NEPAL CATALOGUING IN- PUBLICATION DATA

पुमा, प्रवीण

हेत्छाकुप्पा (नाट्यकृति)/प्रवीण पुमा.–दोस्रो संस्क–ललितपुर : सुम्निमा थिएटर एकेडेमी, २०८० वि.

१०४ पृ., सचित्र

ISBN :978-9937-1-4734-7

१. नेपाली नाटक I. आख्या

N891.4952

Pu779h— dc 23 20231013012

ISBN 978-9-93-714734-7

9 789937 147347



संस्कृतिविद्
श्री चतुरकुमारी राई (ज. १९९३ स.) लाई
जसले बाल्यकालमै मलाई संस्कारिक बनाउनुभयो ।
अनि ती नाट्यकर्मीहरूलाई पनि
जसले यस नाट्यकृतिको प्रदर्शनमा
अहोरात्र खट्नुभयो ।

# प्रकाशकीय

सुम्निमा थिएटर एकेडेमीको स्थापना २०४९ सालमा खोटाङ नेपालमा भएको हो । यस एकेडेमीलाई २०६६ सालमा ललितपुर जिल्ला प्रशासन कार्यालयमा पनि दर्ता गरियो । यसको दर्ता नं ३०३०/३१९ हो भने समाज कल्यान परिषद्को दर्ता नं. २९२८६ हो । यस एकेडेमीले स्थापनादेखि अहिलेसम्म सिमान्तकृत बिषयहरूलाई नाट्यकर्मबाट उठाउँदै आएको छ ।

यस एकेडेमीले सुम्निमा-पारुहाङ (२०४९/२०७१), सुम्निमा (२०५०/२०७१/राष्ट्रिय नाट्य महोत्सव-२०७२, नेपाल सङ्गीत तथा नाट्य प्रज्ञा-प्रतिष्ठान), होङछा (२०५०/बहुभाषिक नाट्य महोत्सव-२०७९, नेपाल सङ्गीत तथा नाट्य प्रज्ञा-प्रतिष्ठान, नेपाल सरकार), निनाम्मा (२०५१), साया (२०५२), हेत्छाकुप्पा (२०५४/२०७२), रिब्रिहाङमा-साल्पाहाङ (२०५४), आस्था : मुन्दुमको (२०५४/२०६६), मेरीहाङमा (२०५६), इडिपस रेक्स (२०५८), एउटा घरको कथा होइन (पूर्वाञ्चल नाट्य प्रतियोगिता-२०५९, सांस्कृतिक संस्थान, ने पाल सरकार), सिमान्तकृत आवाजहरू (२०६२), यलम्बर (राष्ट्रिय नाट्य महोत्सव -२०६३, नेपाल प्रज्ञा-प्रतिष्ठान, नेपाल सरकार), दाम्ला (२०६५), नभनिएको कथा, नगाइएको गीत (२०७५), स्मृति (२०७९, सिनास कलेज) आदि जस्ता दर्जनौं नाटकहरू स्थानीय, क्षेत्रीय र राष्ट्रिय स्तरमा मञ्चन गरेको छ ।

यस एकेडेमीले सुम्निमा (नाटकसङ्ग्रह-२०५३), हेन्खामा-निनाम्मा (मिथकसङ्ग्रह- २०५३), सुम्निमा-पारुहाङ (नाटकसङ्ग्रह-२०६४), हेत्छाकुप्पा (नाट्यकृति-२०६६), निनाम्मा (नाटकसङ्ग्रह-२०६७), साया (नाटकसङ्ग्रह-२०६९), होङछा (नाटकसङ्ग्रह-२०७०) आदि पुस्तकहरू प्रकाशन गरिसकेको छ । तथापि यस हेत्छाकुप्पा (नाट्यकृति-२०८०)ले तपाईंहरूलाई थप नाट्यखुराक दिने अपेक्षा गरेकी छु ।

**लक्ष्मीदेवी राई**
उपाध्यक्ष, सुम्निमा थिएटर एकेडेमी, नेपाल ।

# हेत्छाकुप्पा नाट्यकृतिको नाट्य निर्देशन विधि

- प्रवीण पुमा

## १. विषय प्रवेश

हेत्छाकुप्पा नाट्यकृति खम्बू मुन्दुममा आधारित छ । यस नाट्यकृतिमा मानिसको विकास र परम्पराको विषयवस्तुहरू समेटिएका छन् । यस नाट्यकृतिमा हेत्छाकुप्पा, तायामा, खियामा, साम्फेदिवा, चक्रङदिमा, झोङ्मा, पक्का, निछा, साकुमा, छा, रिनाखा, चक्का, छन्ना र गाउँलेहरू प्रमुख पात्रहरू छन् (राई, २०७१) । यस नाट्यकृतिलाई २०५४ चैत्र ७ गते प्रदर्शन गरियो । यस नाट्यकृतिलाई युनाइटेड स्कुलको आयोजनमा २०६२ साल माघ ११ गते नेपाल प्रज्ञा-प्रतिष्ठानको हलमा पनि प्रदर्शन गरियो । यस नाट्यकृतिलाई २०७४ साल मङ्सिर १८ गते नव प्रखाना स्कुल ललितपुरको प्राङ्गणमा प्रदर्शन गरियो । यस नाट्यकृतिमा लसता व्रजाचार्य, अप्सरा थारू, वन्दना तिमल्सिना, क्षितिज सिलवाल, निकिता मगर, प्रीति शाक्य, रन्जित ठाकुर र रूवेन भण्डारीले अभिनय गरेका थिए । प्रवीण पुमाको लेखन तथा निर्देशन रहेको यस नाट्यकृतिलाई सुम्निमा थिएटर एकेडेमी नेपाल र नव प्रखाना स्कुलले आयोजना गरेको थियो । यस हेत्छाकुप्पा नाट्यकृति २०६६ सालमा प्रकाशन गरिएको थियो । यस नाट्यकृतिमाथि त्रिभुवन विश्वविद्यालयको स्नातकोत्तर, नेपाली विषयमा आनन्दबहादुर राईले मिथकीय अध्ययन (२०७०) र मन्दिरा राईले मानवशास्त्रीय अध्ययन (२०७५) शीर्षकमा शोधपत्र लेखेका छन् भने पोखरा विश्वाविद्यालयको पोखरा विश्वाविद्यालयको दर्शनाचार्य अंग्रेजी विषयमा रमेशकुमार तामाङ र परशुराम राईले हेत्छाकुप्पा नाटकमा पहिचानको खोजी(२०७१) शीर्षकमा शोधपत्र लेखेका छन् । सोही हेत्छाकुप्पा नाट्यकृतिलाई नाट्य निर्देशन विधिअनुसार निर्देशन गरेर विभिन्न मितिहरूमा प्रदर्शन पनि गरिएको थियो ।

## २. १. नाट्य निर्देशन विधि

नाट्य निर्देशन विधि भनेको नाट्य निर्देशनको तौरतरिका हो । यसमा नाट्य निर्देशनको प्रारम्भदेखि अन्त्यसम्मका कार्यहरू गरिन्छ । यसलाई निर्देशकले निर्देशन गर्छ । निर्देशककै नेतृत्वमा नाटकको प्रदर्शन हुन्छ । नाट्य निर्देशनको सम्पूर्ण चाँजोपाँजो पनि निर्देशकले नै मिलाउँछ । यसमा नाट्य गुणस्तरलाई प्राथमिकता दिइन्छ । तर नाट्य निर्देशनको अवधिमा विभिन्न समस्याहरू आउँछन् । त्यसलाई चिरेर जानुपर्छ । त्यसका लागि नाट्य अठोट चाहिन्छ । नाट्य अठोट नै छैन भने नाट्य निर्देशन अधुरो हुन्छ । यसरी नाट्य निर्देशनपछि नाटक प्रदर्शन हुन्छ (पुमा, २०७९ : ४) । यस्ता नाट्य निर्देशन विधिहरू धेरै छन् । यी विधिहरू निर्देशकमा नै भर पर्छ । तर नाट्य निर्देशनका लागि नाट्य छनोट, कलाकार छनोट, पूर्वाभ्यास, प्रदर्शन र समीक्षा आदि प्रमुख विधिहरू हुन् ।

### २.१.१. नाट्य छनोट

नाट्य छनोट भनेको नाट्य कृतिको विषय छनोट हो । नाट्य निर्देशनका लागि नाट्यकृति छनोट गरिन्छ । यसमा नाट्य विषयको खोजी गरिन्छ । उद्देश्य अनुसारको नाट्य विषय पाएपछि त्यो विषयको अध्ययन गरिन्छ । त्यो विषयमा भएका तथ्यहरूको प्रमाणीकरण गरिन्छ । त्यो विषयभित्र सूक्ष्म अध्ययन गरिन्छ । शङ्का लागेको विषयमा थप अनुसन्धान गरिन्छ । त्यसको तथ्य जुटाइन्छ । त्यसलाई प्रमाणीकरण गरिन्छ । तथ्यको प्रमाणीकरण भएपछि नाट्य छनोट गरिन्छ । नाट्य छनोट भएपछि कलाकार छनोट गरिन्छ (ऐ, २०७९ : ५) । सोही विधिअनुसार यस हेत्छाकुप्पा नाट्यकृतिको विषय छनोट गरियो । विषयको छनोटपछि यस हेत्छाकुप्पा नाट्यकृतिको पात्रअनुसार कलाकार छनोट गरियो ।

### २. १. २. कलाकार छनोट

कलाकार छनोट भनेको पात्रअनुसारको कलाकारको छनोट हो । यसमा पात्रअनुसार कलाकार छनोट गरिन्छ । यसले नाटकलाई



प्रवीण पुमाद्वारा लिखित एवम् निर्देशित हेत्छाकुप्पा नाटकमा मिति २०७२।०४।२२ गते ललितपुरस्थित सानो हात्तीवनमा अभिनय गर्दै कलाकारहरू अङ्किता राई, कवि राई, प्रतिना राई, मिस्मा श्रेष्ठ आदि ।

वास्तविक देखाउँछ । तर कलाकार छनोटअगाडि कलाकारको खोजी गरिन्छ । खोजिएका कलाकारहरूमध्ये पात्रलाई सुहाउने कलाकार चयन गरिन्छ । यसमा पात्र र कलाकारमा समानता हुनुपर्छ । असमानता भएका नाटकमा बनावटीपन देखिन्छ । पात्र छनोटमा निर्देशकले स्वविवेक प्रयोग गर्छ । यो छनोट आन्तरिक वा बाह्य वा दुवै प्रक्रियाबाट गरिन्छ । आन्तरिक छनोटमा विश्वासको प्रक्रिया हुन्छ तर बाह्‍य छनोटमा व्यावहारिकतालाई चलायमान गरिन्छ । यसले नाटकलाई स्वतन्त्रता दिलाउँछ । यसरी कलाकारको छनोटपछि पूर्वाभ्यास गरिन्छ (ऐ, २०७९ : ६) । सोही विधिअनुसार यस हेत्छाकुप्पा नाट्यकृतिको कलाकार छनोट गरियो । कलाकार छनोटपछि यस नाट्यकृतिमा पूर्वाभ्यास गरियो ।

### २. १. ४. पूर्वाभ्यास

पूर्वाभ्यास भनेको मुख्य कार्यभन्दा अगाडिको अभ्यास कार्य हो । यसले पछिको कार्यभार गर्छ । पूर्वाभ्यासका लागि पहिला कलाकारलाई नाटकको पाठ दिइन्छ । त्यो पाठलाई मिहीन तरिकाले पढिन्छ । नाट्यपाठभित्रको गहिराइमा पुगिन्छ । सम्बन्धित पात्रको

संवादलाई कण्ठस्थ गरिन्छ । संवाद पूरा भएपछि भावमा डुबेर अभिनय गरिन्छ । अभिनय पूरा भएपछि ब्लकिङ गरिन्छ । ब्लकिङ सेट, प्रकाश, वेशभेषा, सामग्रीहरू, सङ्गीत आदिको संयोजन गरिन्छ भने तिनीहरूलाई सम्पादन पनि गरिन्छ । यसमा राम्रो पक्षलाई राखिन्छ भने नराम्रो पक्षलाई सुधारिन्छ । यसरी ब्लकिङले नाटकलाई आकर्षक बनाउँछ । ब्लकिङपछि नाटकको पूर्वाभ्यासले पूर्णता पाउँछ । पूर्वाभ्यासले पूर्णता पाएपछि नाटकलाई प्रदर्शन गरिन्छ (ऐ, २०७९ : ७) । सोही विधिअनुसार यस हेत्छाकुप्पा नाट्यकृतिको पूर्वाभ्यास गरियो । यस नाट्यकृतिको पूर्वाभ्यास अवधिमा धेरै नाट्यघटनाहरूलाई काँटछाँट गरियो । यस अवधिमा कैयौँ पल्ट ता नाट्यघटना कि धेरै भएको थियो कि थोरै । काट्ने र जोड्ने काम कहिलै सकिएन । यसले समय पनि धेरै नै लियो । यसरी पूर्वाभ्यासपछि यस हेत्छाकुप्पा नाट्यकृतिको प्रदर्शन गरियो ।

### २.१.५. प्रर्दर्शन

प्रदर्शन भनेको कार्य प्रस्तुति हो । प्रदर्शनका लागि नाटकको गुणस्तरलाई ख्याल गरिन्छ । पूर्वाभ्यास प्रदर्शन योग्य भएपछि नाट्यकृतिलाई रङ्गमञ्चमा प्रदर्शन गरिन्छ । तर नाटकको प्रदर्शन पूर्व भरपुर पूर्वाभ्यास गराइन्छ । यसमा सम्बन्धित नाट्यघटनालाई मस्तिष्कमा राखेपछि नाट्यभावको गहिराइमा डुबेर प्रदर्शन गरिन्छ । नाट्यप्रदर्शन अवधिमा घटनाअनुसार कलाकारको भाव अभिव्यक्तिमा परिवर्तन आउँछ । यस समयमा कलाकार कहिले चिच्याउँछ । कहिले हाँस्छ । कहिले उफ्रिन्छ । कहिले रुन्छ । त्यस समयमा पात्रहरूको चरित्रअनुसार कलाकारमा विभिन्न भाव भङ्गीपन आउँछ । यसले नाट्य प्रदर्शनलाई जीवन्त बनाउँछ । दर्शकलाई उत्साहित गराउँछ । यस प्रदर्शनमा दर्शकलाई पनि उपस्थित गराइन्छ । दर्शकविना नाटकको प्रदर्शन अधुरो मानिन्छ । यसरी नाट्य प्रदर्शनपछि समीक्षा गरिन्छ (ऐ, २०७९ : ८) । सोही विधिअनुसार यस हेत्छाकुप्पा नाट्यकृतिको प्रदर्शन गरियो । यस नाटकको प्रदर्शनपछि समीक्षा गरियो ।

### २. १. ५. समीक्षा

समीक्षा भनेको मूल्याङ्कन हो । प्रदर्शनपछि समीक्षा गरिन्छ । यसमा नाटकको राम्रो र नराम्रो दुवै पक्षलाई केलाइन्छ । राम्रो पक्षलाई निरन्तरता दिइन्छ । कमजोरीहरूलाई सुधारिन्छ । सुधारिएको नाटकलाई पुनः प्रदर्शन गरिन्छ । यसमा दर्शकको विचारलाई पनि समावेश गरिन्छ । सम्भव भएसम्म यसमा दर्शकलाई पनि सहभागी गराइन्छ । यसमा दर्शक नै निर्णयक मानिन्छ । दर्शकविना नाट्यसमीक्षा पनि अधुरो मानिन्छ (ऐ, २०७९ : ९) । सोही विधिअनुसार यस सुम्निमा नाट्य प्रदर्शनको समीक्षा गरियो । त्यो समीक्षाबाट प्राप्त विचारहरूलाई यस नाट्यकृतिमा समेटियो । यस नाट्य समीक्षाबाट प्राप्त विचारहरूलाई आवश्यकताका आधारमा अगामी संस्करणमा समावेश गरिनेछ ।

## ४. निष्कर्ष

नाट्य निर्देशनको विधि भनेको नाट्य प्रदर्शनको तौरतरिका हो । यसमा नाट्यप्रदर्शनको प्रारम्भदेखि अन्तयसम्मका सम्पूर्ण कार्यहरू हुन्छन् । नाट्य निर्देशनका लागि नाट्य छनोट, कलाकार छनोट, पूर्वाभ्यास, प्रदर्शन र समीक्षा आदि प्रमुख विधिहरू मानिन्छन् । यसलाई निर्देशकले नियन्त्रण गर्छ । नाट्य निर्देशनका विधिहरू धेरै छन् । यस विधिलाई निश्चित रूपमा किटान गर्न सकिँदैन । यी माथिका नाट्य निर्देशनका विधिहरू प्रतिनिधि मात्रै हुन् । नाट्य निर्देशन विभिन्न विधिबाट पनि गर्न सकिन्छ । यो विधि निर्देशकमा भर पर्छ । यसमा जीवनको भाव मात्रै उतारिएको हुन्छ । नाट्य निर्देशन कलाकारको क्षमतामा पनि भर पर्छ । नाट्य निर्देशनको सबैभन्दा भरपर्दो विधि भनेको विषयको गहिराइमा डुबेर बढीभन्दा बढी पूर्वअभ्यास गर्नु नै हो । यसले जीवनको यथार्थतालाई बुझ्न सहयोग गराउँछ । यी माथिका विधिहरूलाई अपनाएर नाट्य निर्देशन गरेमा बढी भरपर्दो देखिन्छ । सोही विधि अपनाएर २०६६ सालमा प्रकाशित हेत्छाकुप्पा नाट्यकृतिको निर्देशन गरिएको थियो । त्यही हेत्छाकुप्पा नाट्यकृतिलाई केही परिमार्जनसहित सम्पादन गरेर दोस्रो संस्करण प्रकाशन गरिएको छ ।

यस नाट्यकृतिमा कथ्य भाषा प्रयोग गरियो । त्यो कथ्य भाषा जनजातीय समाजबाट लिइएको हो । यस समाजमा लिङ्ग भेद हुँदैन । अत, यस नाटकको पात्रहरूको संवादमा पनि लिङ्ग छुट्याइएको छैन । यसले केन्द्रीकृत व्याकरणीय संरचनालाई केही ठेसमेस पक्कै पनि बनाएकै छ तर यस नाटकको मुख्य उद्देश्य व्याकरणीय संरचनालाई बाहिर ल्याउनु मात्रै होइन, स्थानीयत्वलाई पनि केन्द्रीकृत गर्नु हो । स्थानीय भाषिक अवस्था पनि बुझ्नु हो । अतः व्याकरणगत रूपमा अनौठो लागे तापनि स्थानीय भाषिक रूपमा तिनीहरू शुद्ध नै मानिन्छन् ।

यस नाट्यकृतिमा वरिष्ठ साहित्यकार वसन्तराज अज्ञातको भाषा शुद्धीकरणसहितको बौद्धिक योगदान रहेको छ । अन्त्यमा, यस हेत्छ्याकुप्पा नाट्यकृति प्रकाशनका लागि प्रत्यक्ष-अप्रत्यक्ष रूपमा सहयोग पुऱ्याइदिनुहुने सम्पूर्ण महानुभावहरूप्रति हार्दिक कृतज्ञता व्यक्त गर्दछु ।

## सन्दर्भ सामग्री


पुमा, प्रवीण । २०७९ स. । नाट्य निर्देशनको विधि । काठमाडौँ : सिनास क्याम्पस, कोटेश्वार, नेपाल ।

राई, आनन्दबहादुर । २०७० स. । प्रवीण पुमाका नाटकमा किराती मिथकको अध्ययन, (अप्र., एम.ए. शोधपत्र, स्नातकोत्तर तह) । नेपाली केन्द्रीय विभाग, त्रि.वि., कीर्तिपुर, नेपाल ।

राई, मन्दिरा । २०७३ स. । प्रवीण पुमाका नाटकमा मानवीयता, (अप्र., एम.ए. शोधपत्र, स्नातकोत्तर तह, नेपाली केन्द्रीय विभाग, त्रि. वि., पद्मकन्या क्याम्पस, काठमाडौँ, नेपाल ।

राई, नोवल किशोर । प्रवीण पुमाका हेत्छ्याकुप्पा नाटकमा पहिचानको खोजी । https://www.mundhumstar.com/2019/01/18/5775/

Rai, Parshuram and Tamang, Ramesh Kumar. 'Quest of identity in Praveen Puma's Play Hetchhakuppa'. Unpublished Thesis (Independent Studies) for M. Phil, 2nd Semester, IACER, Kathmandu, 2014.



| | | |
|---|---|---|
| नाटक | : | हेत्छाकुप्पा |
| लेखन/निर्देशन | : | प्रवीण पुमा |
| कलाकारहरू | : | लस्ता व्रजाचार्य, अप्सरा थारू, वन्दना तिमल्सिना, क्षितिज सिलवाल, निकिता मगर, प्रीति शाक्य, रन्जित ठाकुर र रूवेन भण्डारी र प्रवीण पुमा आदि । |
| निर्माता | : | चतुरकुमारी राई |
| आयोजक | : | सुम्निमा थिएटर एकेडेमी, नेपाल । |
| प्रस्तुति | : | नव प्रखाना स्कुल ललितपुर । |
| स्थान | : | नव प्रखाना स्कुल ललितपुर । |
| मिति | : | २०७४ साल मङ्सिर १८ गते । |

# पात्रहरू

| | | | |
|---|---|---|---|
| १. | हेत्छाकुप्पा | : | तायामा र खियामाको एक्लो भाइ । |
| २. | तायामा | : | खियामा र हेत्छाकुप्पाको दिदी |
| ३. | खियामा | : | तायामाको बैनी र हेत्छाकुप्पाको दिदी |
| ४. | साम्फेदिवा | : | खियामालाई मार्ने होङ्ग्रायो चरा |
| ५. | चक्रङदिमा | : | हेत्छाकुप्पालाई दु:ख दिने राक्षसनी |
| ६. | झोङ्मा | : | चक्रङदिमाको छोरी |
| ७. | पक्का | : | चक्रङदिमाको अपांग दाजु |
| ८. | निछा | : | चक्रङदिमाको लठेप्रो भाइ |
| ९. | साकुमा | : | हेत्छाकुप्पालाई पाल्ने बुढीमान्छे |
| १०. | रिनाखा | : | हेत्छाकुप्पाको श्रीमती |
| ११. | छा | : | हेत्छाकुप्पा र रिनाखाको बच्चा |
| १२. | वापा | : | ठुलो प्रजातिको कुखुराको भाले |
| १३. | किप्पा | : | उपियाँ |
| १४. | चक्का | : | हेत्छाकुप्पाको मामा |
| १५. | छन्ना | : | हेत्छाकुप्पाको माइजू |
| १६. | खुन्मा | : | चक्का र छन्नाको भरिया । |
| १७. | छिमेकीहरू | : | बच्चादेखि वृद्धासम्मको महिला-पुरुष गाउँलेहरू |

## नाट्यसार :

हेत्छाकुप्पा नाट्यकृति खम्बू मुन्दुममा आधारित छ । यस नाट्यकृतिमा मानिसको विकास र परम्पराको विषयवस्तुहरू समेटिएका छन । यस नाट्यकृतिमा हेत्छाकुप्पा, तायामा, खियामा, साम्फेदिवा, चक्रङदिमा, झोङ्मा, पक्का, निछा, साकुमा, छा, रिनाखा, चक्का, छन्ना र छिमेकीहरू प्रमुख पात्रहरू छन् । यस नाटकमा तायामा र खियामाले हेत्छाकुप्पालाई मरेको ठानेर छोडेर जान्छन् । तर हेत्छाकुप्पा बेहोस मात्रै भएको हुन्छ । बेहोसबाट उठेर केरा खान्छ । तर हेत्छाकुप्पालाई चक्रङदिमाले बोकेर लान्छिन् । घरमा पुऱ्याएर झोङमालाई दिएर माइतीहरू बोलाउनु जान्छिन् । तर हेत्छाकुप्पाले झोङमालाई मारेर भाग्छ । चक्रङदिमाले हेत्छाकुप्पालाई मार्न खेद्छ, तर भेट्दैन । चक्रङदिमाले हेत्छाकुप्पालाई खेद्दै जाँदा योङवामाले बगाएर लान्छ, हेत्छाकुप्पा फर्किएर तुवाचुङमा बस्छ । हेत्छाकुप्पाले अचानक खाना भेट्छ । त्यो खाना खाएर हेत्छाकुप्पा र साकुमा सुत्छन् । पछि त्यो खाना बनाउने रिनाखा भएको पत्ता लाग्छ । हेत्छाकुप्पा र रिनाखाको विवाह हुन्छ । विवाहपछि बच्चा जन्मिन्छ, तर खाल्डोमा झरेर बच्चाको मृत्यु हुन्छ । बच्चाको मृत्युपछि हेत्छाकुप्पाको रिनाखासँग विवाह गरेर मावाली रित गरिन्छ । यस नाट्यकृति संयोगान्तमा अन्त्य हुन्छ ।

# पहिलो दृश्य

स्थान : तुवाचुङ
समय : बेलुका
पात्रहरू : हेत्छाकुप्पा, तायामा र खियामा ।
घटना : हेत्छाकुप्पालाई मरेको ठानेर तायामा र खियामाले छोडेर जान्छन् ।

(चराचुरुङ्गीहरू चिरबिराइरहेका छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको काखमा तुवाचुङ[1] छ । तुवाचुङमुनि योङवामा[2] बगिरहेको छ । तुवाचुङको घनाजङ्गलमा ओडारहरू छन् । ओडारहरूको वरिपरि वाहिबुङ[3], बाँसघारी, भोर्ला र केरा घारीहरू छन् । ओडारको भित्तामा ढोल, झ्याम्टा, सिलिमी[4], पोमी[5] र तालित[6] झुन्डिएको छ । एक कुनामा बाँसको लिङ्गो गाडिएको छ । त्यो लिङ्गोको टुप्पोमा सेतो ध्वजा छ । त्यो लिङ्गोको फेदमा भोर्लाको पातमाथि साकेलुङ[7], सोलोन्वा[8], अदुवा र खुर्मी राखिएको छ । यसको एक छेउमा सुप्तुलुङ[9] छ । त्यो सुप्तुलुङबाट धुवाँ आइरहेको छ ।

---

१. मुन्दुमी क्षेत्र । यो तुवाचुङ खोटाङ जिल्ला, नेपालमा पर्छ ।
२. दुधकोशी ।
३. मुन्दुमी रुख ।
४. मुन्दुमी सिलिमी ।
५. मुन्दुमी चौरीको पुछर ।
६. बाँसको भाटाबाट बनाइएको गुलेली ।
७. साकेला शिला । यसलाई उभौली र उधौलीमा धुमधामसहित पूजा गरिन्छ ।
८. चिण्डोभित्र पवित्र पानी, तीतेपाती, मर्चा मिसाइएको मुन्दुमी पानी ।
९. मुन्दुमी तीनचुलाढुङ्गा । यस सुप्तुलुङमा खम्बूहरूको जन्मदेखि मृत्युसम्मको मुन्दुमहरू प्रदर्शन गरिन्छ ।

यसको छेउमा तान, चर्खा, कपास, धागो र कपडा छ । सुप्तुलुङको छेउमा करिव १२ वर्षको हेत्छाकुप्पा सुतिरहेको छ । उनको अनुहार गोलो, नाक थेप्चो, शरीर मोटो र उचाइ मध्यमको छ । हेत्छाकुप्पाले शरीरमा लोछुम[१०] र घाँटीमा वुन्छत[११] लगाएको छ । कपाल लामो र घुङरिङएको छ । काँधमा जावी[१२] र कम्बरमा कर्द भिरेको छ । लामो यात्राको तालमा साकेला[१३]को धुन आउँछ ।)

साकेला धुन : ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक
ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक ।[१४]
(केही छिनपछि आवाजहरू बिस्तारै विलय हुन्छ ।)

खियामा : (पार्श्वमा) नाना, आज पनि एउटै अन्न भेटिएन । आबो के खाने होला ?

तायामा : (पार्श्वमा) त्यै त, के खाने ? के ? म आफै छक्क परेको छु । (गफ गर्दै करिव १५ वर्षकी खियामा र करिव १८ वर्षकी तायामाको प्रवेश हुन्छ । दुवै जनाको अनुहार गोलो छ । नाक थेप्चो छ । उचाइ मध्यमको छ । दुवै जनाले शरीरमा मेख्ली[१५], नाखमा नाबुकबुङ[१६], कानमा नाबेकबुङ[१७], घाँटीमा साक्साबुङ[१८], हातमा छिबुङ[१९] र खुट्टामा लोङबुङ[२०] लगाएका छन् । तायामाको शिरमा लिम्चिमबुङ सिउरिएकी छिन् । खियामाको शिरमा

१०. खाँडीबाट बनाइएको दौरा प्रकारको लामो पुरुष बस्त्र । यसलाई घाँटीदेखि खुट्टासम्म लगाइन्छ ।
११. मालिङगोको चोयाबाट बनाइएको मुन्दुमी गहना, यसलाई ज्ञानको प्रतिक मानिन्छ ।
१२. सुनाखरीको धागोबाट बुनिएको जालीवाला झोला ।
१३. मुन्दुमी लय ।
१४. यो साकेन्वाको ताल हो । यो तालले लामो यात्राको सङ्केत गर्छ । यो ताल लामो यात्रा गर्दा बजाइन्छ ।
१५. कपासबाट बनाइएको स्त्री वस्त्र । यसलाई घाँटीदेखि खुट्टासम्म लगाइन्छ ।
१६. वनस्पतीबाट बनाइको ढुङ्ग्री ।
१७. वनस्पतीबाट बनाइको मुन्द्री ।
१८. दुम्सीको काँडाबाट बनाइएको माला । यसलाई माङको गहना मानिन्छ ।
१९. वनस्पतीबाट बनाइको बाला ।
२०. वनस्पतीबाट बनाइको कल्ली ।

गोवाबुङ सिउरिएकी छिन् । उनीहरूले साक्साबुङमा बिनायो र कम्मरमा खुर्पा भिरेका छन् ।)

खियामा : (छेउमा गएर नियाल्दै) छेन्वा[२१], छेन्वा, ए... छेन्वा ।

हेत्छाकुप्पा : (आँखा मिच्दै) हजुर, नाना[२२] ।

तायामा : (उठाउँदै) छेन्वा, तिमी अझै सुतिरहेकै छौ ? उठ धेरै सुत्नु हुँदैन, लोदर लाग्छ ।

हेत्छाकुप्पा : (समालिएर उठ्दै) म उठिहालेँ नि नाना ! (तन्किँदै) मता कति सारो भुसुक्कै पो निदाएछु ।

तायामा : हेर न छेन्वा, हाम्रो मामा-पापाको मृत्यु भएपछि यो गाउँभरि नै महाअनिकाल लागेको छ । यो गाउँमा खानेकुरा केही पनि छैन । अस्ति-अस्ति ता, जङ्गलबाट ऐँसेलु खोजेर तिमीलाई ल्याइदिन्थ्यौँ । तर आजदेखि ता, त्यो ऐँसेलु पनि छैन ।

खियामा : हो छेन्वा, हामीले खाने वनतरूनलाई पनि चक्रङदिमाले पत्तालमुनि भसाइदियो । आबो हामीले त्यो वनतरूनलाई पनि खनेर खानु नसकिने भयौँ । गिठालाई पनि खानै नहुने गरी तीतो बनाइदियो । आजदेखि खानेकुरा पनि केही छैन । आबो हामी भोकभोकै मर्ने नै भयौँ । फेरि तिमीलाई भोक लागेपछि सधैँ बेहोस हुन्छौ ।

हेत्छाकुप्पा : (स्वीकारोक्तिमा) त्यो ता हो नाना, तर के गर्नु ? आज मलाई फेरि अरू दिनभन्दा धेरै भोक लागेको छ ।

तायामा : (गोजीबाट ऐँसेलु झिकेर दिँदै) छेन्वा, यी ऐँसेलु ।

हेत्छाकुप्पा : (ऐँसेलु लिँदै) आलाङ्ने[२३], नाना ।

खियामा : (गोजीबाट ऐँसेलु झिकेर दिँदै) छेन्वा, यी ऐँसेलु ।

हेत्छाकुप्पा : (ऐँसेलु लिँदै) आलाङ्ने, नाना ।

तायामा : तर चिन्ता नलेऊ, छेन्वा । हामी छौँ । जसरी भए पनि खानेकुरा ल्याएर तिमीलाई अघाउन्जेल खानु दिन्छौँ ।

---

२१. एकै घरको एक्लो माइती ।
२२. आफनै घरको दिदीहरू ।
२३. श्रद्धासहित धन्यवाद ।

खियामा : (सुप्तुलुङमा बुछिरोङ बसाउँदै) बरु तिमीले चाहिँ हामी नआउन्जेलसम्म यो सुप्तुलुङमा आगो बालेर यो बुछिरोङ[२४] पकाउँदै गर है ।

हेत्छाकुप्पा : (ऐँसेलु खाँदै) हवस् नाना । तपाईंहरूले भनेझैँ बुछिरोङ पकाउँछु ।

तायामा : खियामा, हामी फेरि पनि एकपल्ट गाउँतिर अन्न खोज्नु जाऊँ है ? कतै अन्न भेटी पो हालिन्छ कि ?

खियामा : (स्वीकारोक्तिमा) हुन्छ नाना । कतै अन्न भेटिहालियो भने ता, हाम्रो भाग्य नै पो पल्टिन्छ त ।

हेत्छाकुप्पा : (निर्दोष रूपमा हेर्दै) नाना, भरै छिट्टै आउनुहोस् है ।

तायामा : (मायाले हेत्छाकुप्पालाई छाम्दै) लौ, लौ । हामी अन्न खोजी ल्याएर छिट्टै आउँछौँ । अनि खाना पकाएर सबै जनाले अघाउन्जेल खानुपर्छ ।

खियामा : (हेत्छाकुप्पालाई छाम्दै) हो छेन्वा, आजचाहिँ भुँडी अघाउन्जेल खाना खानुपर्छ है ? (गोजीको ऐँसेलु निकालेर खुवाउँदै) लु उठ । अहिलेचाहिँ उठेर यो ऐँसेलु खाँदै गर । भरै बुछिरोङ पाकेपछि खाना खाउँला ।

हेत्छाकुप्पा : (उठेर रमाउँदै नाच्दै) आहा ! आज खाना खाने..., आज खाना खाने..., आज खाना खाने...। (हेत्छाकुप्पाको खुट्टाले दाउरामा टेकेर बुछिरोङ घोप्टिन्छ । हेत्छाकुप्पा पनि दाउरामा अल्झिएर लड्छ । आकाश गड्गडाउँछ । चट्याङ पर्छ । बिस्तारै सबै आवाजहरू रोकिन्छ ।)

खियामा : (दौडिँदै गएर हेत्छाकुप्पालाई उठाउँदै) रोगो, रोगो, नामधुङपा लावा ताएँ-ताएँ ।[२५]

तायामा : (उठाउँदै) छेन्वा, छेन्वा आँखा खोल त । (हेत्छाकुप्पा अचेत हुन्छ ।)

खियामा : (झकझकाउँदै) छेन्वा, यता हेर त । (हेत्छाकुप्पालाई अँगालो मारेर रुँदै) छेन्वा ...

तायामा : (अँगालोमा लिँदै) छेन्वा, तिमीले पनि मामा-पापाले

---

२४. बुछामा पकाइने एक प्रकारको भात । यो खाना सानो नानीहरूका लागि पकाइन्छ ।

२५. यसको ठ्याक्कै अर्थ छैन । तर पुमा समुदायले सातो बोलाउँदा यो शुद्ध उच्चारण गर्छन् ।

जस्तै कहिल्यै नफर्किने गरी हामीलाई छोडेर गयौ है ? मामा-पापाले पनि हामीलाई नाबालकमै टुहुरा बनाएर जानुभयो । आबो तिमीले पनि हामीलाई माइतीविहीन बनायौ है ? आबो हामी मात्रै यो पृथ्वीमा कसरी बसौँ नि । (घरभित्रबाट सेतो बर्को ल्याएर हेत्छाकुप्पाको शरीरमाथि छोपिदिएर भक्कानिएर रुन्छिन् ।)

खियामा : (आँसु पुछेर सान्त्वना दिँदै) नाना, आबो नरुनुहोस् । बरु नरोईकन उठेर छेन्वाको आत्मालाई चिरशान्ति मागिदिऊँ । आबो छेन्वाको भाग्य नै त्यति रैछ ।

तायामा : (रुँदै) छेन्वा, तिम्रो भाग्यमै यति नै रैछ । चित्त नदुखाई बुङकुरा[२६]मा गएर बुधाहाङ[२७]सँग बस है । तिम्रो खाने ठाउँ त्यहीँ छ । बस्ने ठाउँ त्यहीँ छ । खेल्ने ठाउँ पनि त्यहीँ छ । त्यहीँ खानू, त्यहीँ बस्नू, त्यहीँ खेल्नू है । पछि माङपा ल्याएर तिमीलाई संधैंको लागि बुधाहाङसँग बसाइदिन्छौँ ।

खियामा : (आँसु पुछ्दै) नाना, आबो यसरी रोएर हेत्छाकुप्पाको आत्मालाई बाटो छेक्नु हुँदैन । आबो हेत्छाकुप्पाको अन्त्येष्टिको गरिदिनुपर्छ । बरु तपाईंले बुछिरोङ पकाउनुहोस् । म हरियो केराको पात ल्याउँछु ।

तायामा : लौ लौ, खियामा । तिमीले बाँस पनि काटेर ल्याऊ है । बाँकी सामानहरू म मिलाउँछु ।

खियामा : लौ लौ, नाना । (तायामाले बुछिरोङ पकाएर लासको टाउकोमा राख्छिन् । खियामाले केराको पात ल्याएर लासमाथि राख्छिन् र हरियो बाँस कोटेर ल्याउँछिन् ।)

तायामा : खियामा, आबो चारवटा हरियो बाँसको किला गाडौँ । त्यो किलामा सेतो कपडाकै छाना बनौँ है, नत्र छेन्वालाई जाडो हुन्छ । यो छानाले घाम-पानी पनि छेल्छ ।

---

२६. मुन्दुमअनुसार बुधाहाङको सुनैसुनको दरबार । यस दरबारमा सहज मृत्यु भएका मृतात्माहरूलाई मुन्दुमको माध्मबाट लगेर राखिन्छ ।

२७. मुन्दुमअनुसार आकाशको बुधाहाङले सहज मृत्यु भएका सबैलाई उहाँको सुनैसुनको दरबारमा राख्नुहुन्छ ।

खियामा : हवस् नाना । (दुवैले चार सुरमा बाँसको किला गाड्छन् । चिहानमाथि सेतो कपडाको एक पाखे छाना बनाउँछन् । चिहानमाथि बाँसको उल्टो चुङ्गे[२८]मा जाँडपानी, तीनवटा अगुल्ठो, एउटा बुछिरोङ, एउटा हरियो केराको पात र एउटा कर्द राख्छन् ।)

तायामा : छेन्वा, चित्त नदुखाई पुर्खाहरूसँग बस है ।

खियामा : (तायामातिर हेर्दै) खियामा, हाम्रो एक मात्र माइतीको पनि मृत्यु भयो । आबो हामी पनि यहाँ नबसौँ ।

तायामा : (आँसु पुछ्दै) हुन्छ, तर हाम्रो माइतीको सम्झनामा उसको टाउको छेउमा म लिम्चिमबुङ[२९] रोप्छु । खुट्टाको छेउमा तिमीले गोवाबुङ[३०] रोप । अनि हामीचाहिँ चरा भएर उडेर अन्तै जाऊँ, यहाँ नबसौँ, अशुभ हुन्छ ।

खियामा : तर नाना, हामी चरा भएर उडेर गएपछि हामीबीचको खबरचाहिँ कसरी थाहा पाउनु त ?

तायामा : खियामा, हामीमध्ये जसले रोपेको बुङ ओइलिएको हुन्छ, उसको मृत्यु भएको थाहा पाउनुपर्छ । यदि मैले रोपेको लिम्चिमबुङ ओइलियो भने म मरेको तिमीले थाहा पाउनू । यदि तिमीले रोपेको गोवाबुङ ओइलियो भने तिमी मरेको मैले थाहा पाउने छु, हुन्छ ?

खियामा : हुन्छ नाना । (तायामाले लिम्चिमबुङ ल्याएर हेत्छाकुप्पाको शिरतिर र खियामाले गोवाबुङ ल्याएर हेत्छाकुप्पाको खुट्टातिर रोप्छन् ।)

तायामा : खियामा मैले त छेन्वाको टाउको छेउमा लिम्चिमबुङ रोपिसकेँ । तिमीले छेन्वाको खुट्टाको छेउमा गोवाबुङ रोपिसक्यौ नि ।

खियामा : अँ सकेँ, नाना । (एकोहोरो तलतिर हेरेर अचम्म मान्दै) नाना, तपाईंको आँसुबाट ता तावा[३१] भइसकेछ नि !

---

२८. हरियो बाँसबाट बनाइएको पानी बोक्ने भाडा ।

२९. मुन्दुमी फूल । यो फूल लेकमा पाइन्छ । यसलाई सम्पन्नताको प्रतीक मानिन्छ ।

३०. मुन्दुमी फूल । यो फूल बेँसीमा पाइन्छ । यसलाई द्रुतगतिको प्रतीक मानिन्छ ।

३१. मुन्दुमअनुसार तायामाको आँसुबाट बनेको तावाखोला माझकिरातको खोटाङ जिल्ला भएर बग्छ ।

तायामा : (एकोहोरो अर्कोतिर हेर्दै) अँ, भएछ । अनि खियामा, तिम्रो आँसुबाट पनि ता, रावा[३२] भइसकेछ नि त! (दुवै जनाले एकोहारो टाढा हेरिरहन्छन् ।)

खियामा : नाना, तपाईंको आँसुबाट तावा भइसक्यो, मेरो आँसुबाट रावा भइसक्यो । आबो हामीले मुन्दुम फलाक्दै चरा भएर उडेर आ-आफैँ जाऊँ ।

तायामा : लौ, लौ खियामा । त्यसको लागि तिमी खिवामा हुनु, म तावामा हुन्छु ।

खियामा : हवस् नाना, म खिवामा भएर जान्छु । तर, मलाई बाटो थाहा नै छैन । त्यसैले तपाईं नै अगाडि तावामा भएर उडेर जानुहोस् । म तपाईंको पछिपछि आउँछु ।

तायामा : ठीकै छ, खियामा । तिमीलाई बाटो थाहा छैन भने, म नै अगाडि जाउँला । तर, तिमी पनि मेरो पछिपछि आऊ नि ! नत्र हाम्रो यात्रामा अशुभ हुन्छ ।

खियामा : हवस् नाना । (दुवै जना रुन्छन् । रिसिया तालमा थाल-ढोलको तला बिस्तारै बज्न थाल्छ ।)

रिसिया : कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु...।[३३]

दुवै जना : (धर्ती, आकाश र सुप्तुलुङलाई ढोग्दै)
हेन्खाऽऽ...बोब्बीऽऽऽ... मामुनाऽऽ...बेनऽऽऽ...
निनामऽऽऽ...बोब्बीऽऽऽ...मामुनाऽऽऽ...बेनऽऽऽ...
छेत्लुङ्ऽऽऽ...माछेऽऽऽ.....मामुनाऽऽऽ...बेनऽऽऽ...
माक्लुङ्ऽऽऽ...माछेऽऽऽ.....मामुनाऽऽऽ...बेनऽऽऽ...
साकुलङच्यो ऽऽऽ... दिवालङच्यो ऽऽऽ...
साकुमाच्यो ऽऽऽ... दिवामाच्यो ऽऽऽ...।[३४]

रिसिया : कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु...

---

३२. मुन्दुमअनुसार खियामाको आँसुबाट बनेको रावाखोला नेपालको सोलुखम्बु र खोटाङ जिल्ला भएर बग्छ ।

३३. मुन्दुमी ताल । यस तालमा सिलीहरू टिपिन्छ ।

३४. पृथ्वीको उत्पत्ति हुँदाखेरि
आकाशको उत्पत्ति हुँदाखेरि
दल्छिनढुङ्गाको उत्पत्ति हुँदाखेरि
वज्रढुङ्गाको उत्पत्ति हुँदाखेरि
हे पुर्खाहरू हो

दुवै जना : (धर्ती, आकाश र सुप्तुलुङलाई ढोग्दै)
मामावाए ऽऽऽ...चुनिवावो ऽऽऽ...
साकोङखायाऽऽऽ... मोरिखायाऽऽऽ...
तिरिनिआऽऽऽ... छाप्दुमिआऽऽऽ...
होङछासिमा मामुनाऽऽऽ...बेनऽऽऽ...
नामछे पुङलेन
माङछे पुङलेन
माङपाछे सिपुङ
हाङपाछे सिपुङ बेन
आ छेन्वाछे तसियाबेन
पुक्सोइ निलोक
झाराकु तुधिङे युङ्याङ ।[३५]
(रिसियाको ताल जोडजोडले बज्छ । प्रकाश बिस्तारै मधुर भएर पुनः प्रस्ट हुन्छ । तायामाले तायामा र खियामाले खिवामाको रूप लिएर सिली टिप्छन् । तायामाले शरीरमा तावातित[३६] र खिपामाले खिवातित[३७] लगाएका छन् । केही मानिसहरू बिस्तारै सिली टिप्दै केही दृश्य सामग्रीहरू लिएर आउँछन् । सिली टिप्दै सबैले पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । दुवै जना उडेर जान्छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा विलय हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

---

३५. आमाकै गर्भमा
लेखान्तले लेखिदियो ।
मान्छे मर्ने हुँदाखेरि
घाम पनि अस्ताइ जान्छ
माङ पनि हराइ जान्छ
माङपा पनि मरिजान्छ
राजा पनि मरिजान्छ
तिमी पनि मरिगयौ
तिम्रो बाटो राम्ररी जाऊ है
त्यही सबै थोक छ ।

३६. मयूर आकारको शरीरको लुगा ।

३७. धनेश आकारको शरीरको लुगा ।

# दोस्रो दृश्य

| | | |
|---|---|---|
| स्थान | : | जंगल |
| समय | : | बिहान |
| पात्रहरू | : | तायामा, खियामा र साम्फेदिवा । |
| घटना | : | हेत्छाकुप्पालाई चक्रङदिमाले बोकेर लान्छ । |

(चराचुरुङ्गीहरू चिरबिराइरहेका छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । घनाजंगलको बिचमा सुकेको रुखमा छ । त्यो सुकेको रुखमाथि साम्फेदिवा बसिरहेको छ । साम्फेदिवाले शरीरमा साम्फेतित[1] लगाएको छ । मुख चपाइरहेको छ । केही छिनपछि डकार्छ ।)

तायामा : (पार्श्वमा) खियामा, खियामा, ए खियामा ! यो खियामा कहाँ गएछ ? यहाँ पनि छैन त ।

साम्फदिवा : (मुख चपाउँदै) कस्तो मिठो रैछ । (केही समयपछि उडेर तायामाको प्रवेश हुन्छ । तायामाको वेशभूषा र गहना पहिलो दृश्यकै निरन्तरता छ ।)

तायामा : (यताउति हेर्दै) हन, यो खिखायामा कहा गएछ ? यो खियामा यहाँ पनि छैन । हिजो ता हामीसंगै हेत्छाकुप्पाको चिहानबाट छुट्टिएको थियौं । तर जतातता खोजी सकें, कही पनि छैन् । यति चाँडै कहाँ गएछ ? (टाढातिर हेर्दै) खियामाले रोपेको गोवाबुङ पनि ओइलिएको थियो ! यसरी आफूले रोपेको बुङ ओइलिएमा त मृत्यु हुन्छ पो भन्ने बाचा गरेको थियौं । कतै, यो खियामाको मृत्यु ता भएन ? अहँ, यो हुन सक्दैन । (साम्फेदिवालाई

---

१. भुवाले प्रकारको लुगा ।

देखिछन् । साम्फेदिवाको नजिक जाँदै) साम्फेदिवा[२], तिमी यहाँ ? तिमी सुकेको रुखमा बसिरहेको छौ ?

साम्फदिवा : (मुख चपाउँदै) अँ, हो त । म सुकेकै रुखमा छु । केही समस्या छ कि ?

तायामा : (विलौना गर्दै) साम्फेदिवा, मैले खियामालाई चारचौंतिस खोजिसकें । तर उसलाई कहीँ पनि भेटिनँ । मैले उसको बारेमा रुखलाई सोधेँ, रुखले पनि उसको बारेमा थाहा पाएन । मैले ढुङ्गालाई सोधेँ, तर ढुङ्गाले पनि उसको बारेमा थाहा पाएन । खियामालाई खोज्दाखोज्दा थाकेर म यहाँ नै आएको छु । कतै तिमीले खियामालाई ता देखेनौं ?

साम्फदिवा : (मुख चपाउँदै) अहँ, देखिनँ । (ङिच्च हाँस्छ ।)

तायामा : (आक्रोशमा) साम्फेदिवा, तिमीले खियामालाई खायौ । तिम्रो दाँतमा खियामाको कपाल छ । तिमी पापी हौ । तिमी असत्ती हौ । तिमीलाई मेरो खियामाले के गरेको थियो र तिमीले मेरो खियामालाई मारेर खायौ ? (आवेगमा) मेरो खियामालाई किन मारेर खायौ ? किन ? किन ? किन ?

साम्फेदिवा : (डराउँदै) मेरो गल्ती भयो । मैले खियामालाई मारेर खानु हुँदैन थियो, तर मारेर खाइहालेँ । अबदेखि त्यस्तो गल्ती कहिले पनि गर्दिनँ । त्यसको लागि माफ पाऊँ ।

तायामा : (पीडामा रूएर शान्त हुँदै) ठीकै छ, साम्फेदिवा । तिमीले मेरो खियामालाई मारेर खानु हुँदैनथियो, तर खाइहालेछौ । तिमीले यो राम्रो गरेनौ । तैपनि खियामाको हड्डी-खुड्डी कहाँ छ ? मलाई देखाइदेऊ ।

साम्फेदिवा : (परतिर देखाउँदै) उ त्यो परको रुखको टोड्कामा छ । (तायामा रूखको टोड्कातिर जान्छिन् । आकाश गडगडाउँछ । बिजुली चम्किन्छ । प्रकाश बिस्तारै विलय भएर पुनः उदाउँछ । साम्फेदिवा उडेर

---

२. एक प्रकारको चरा ।

जान्छ । तायामाले रुखको टोङ्काबाट खियामाको सबै हड्डीहरू निकाल्छिन् ।)

तायामा : (मनोवादमा) आबो खियामाको हड्डीहरूलाई तेलमा डुबाउँछु । त्यो तेलमा खरानी र पानी मिसाउँछु । त्यो हड्डीहरूलाई चुङ्गोभित्र लगाउँछु । अनि तान बुन्छु । (चिहानबाट चुङ्गे ल्याउँछिन् । चुङ्गेमा खियामाको हड्डीहरूलाई लाउँछिन् । त्यो हड्डीहरूमाथि तेल लगाएर खरानी र पानी मिसाउँछिन् । रिसिया तालमा ढोल र थाल बज्न थाल्छ । आकाश र धर्तितिर ढोग्दै मुन्दुम फलाग्छिन् । तान बुनेको अभिनय थाल्छिन् ।)

हेन्खाबोब्बी मामुनाबेन
निनामबोब्बी मामुनाबेन
छेत्लुङ्माछ मामुनाबेन
माक्लुङ्माछ मामुनाबेन
साकुलङच्यो दिवालङच्यो
मामावाए चुनिवावो
साकोङखाया मोरिखाया
तिरिनिआ छाप्दुमिआ
सुम्निमाए पारुहाङआ
सावासिमा मामुनाबेन
खन्नाछे तसियाबेन
कोइना का साया चोङङा ।[३]

---

३. पृथ्वीको उत्पत्ति हुँदाखेरि
आकाशको उत्पत्ति हुँदाखेरि
दल्छिनढुङ्गाको उत्पत्ति हुँदाखेरि
वज्रढुङ्गाको उत्पत्ति हुँदाखेरि
लौ पुर्खाहरू हो
आमाकै गर्भमा
लेखान्तले लेखिदियो
मान्छे मर्ने हुँदाखेरि
तिमी पनि मऱ्यौ ।
तर तिम्रो शिर उठाउँदै छु

तायामा : (धर्ती, आकाश र सुप्तुलुङलाई ढोग्दै)
का रिखि चोङङा
चाप्चा सायाङे लिने
बान्पा सायाङे लिने
साम्बा सायाङे लिने ।[४]
(तानको कपडामा खियामाको अनुहारको बुट्टा निकाल्छिन् । ढोल र थाल जोड-जोडले बज्छ । प्रकाश बिस्तारै मधुरो भएर उज्यालो हुन्छ । खियामा सुतिरहेकी हुन्छिन् । आवाजहरू बिस्तारै मधुरो हुन्छ ।)

खियामा : (बिस्तारै उठेर तन्किँदै) आहाई ... कति सारो भुसुक्कै पो निदाएछु ।

तायामा : (सम्झाउँदै) खियामा, तिमी निदाएको होइनौ । तिमी त मरेको थियौ ।

खियामा : (अचम्म मान्दै) हँ ! हो र ? म मरेको थिएँ रे ?

तायामा : हो खियामा, तिमी मरेको थियौ । तिमीलाई साम्फेदिवाले मारेर खाएको थियो । तर, तिम्रो हड्डीलाई भने, साम्फेदिवाले रुखको टोड्कामा राखेको थिएछ । त्यो रुखको टोड्काबाट तिम्रो हड्डीलाई मैले ल्याएँ । चुङ्गेमा खियामाको हड्डीहरूलाई लाएँ । त्यो हड्डीहरूमाथि तेल मिसाएँ । त्यो तेलमाथि खरानी र पानी मिसाएँ । त्यसपछि मुन्दुम फलाक्दै तान बुनेँ । तान बुन्दा कपडामा तिम्रो अनुहारको बुट्टा निकालेँ । तान बुन्दै जाँदा तिम्रो शरीरको रूप तयार भयो । तिम्रो स्वरूप तयार भएपछि तिमी बिउँतियौ ।

खियामा : ए, हो है । (आभार प्रकट गर्दै) नाना, तपाईं धन्य

---

४. तिम्रो शिर उच्चो रहोस्
हात्तीको शिर जस्तो होस्
भालुको शिर जस्तो होस्
बाँसको शिर जस्तो होस्
तिम्रो शिर उठ्यो है

हुनुहुन्छ । तपाईंले मलाई ब्युँताउनुभयो । नयाँ जीवन दिनुभयो । म तपाईंप्रति आजीवन ऋणी छु ।

तायामा : (सम्झाउँदै) धत् लाटी । आफ्नै नानासँग पनि ऋणी हुनुपर्छ र ? तिमीलाई बचाउनु ता मेरो पनि कर्तव्य हो नि, होइन र ?

खियामा : त्यो ता हो, नाना । तर, तपाईंले मलाई धेरै माया गर्नुहुन्छ र नै ता ब्युँताउनुभयो । नत्र हेत्छाकुप्पालाई पनि ब्युँताउनुहुन्थ्यो नि !

तायामा : त्यो ता हो, खियामा । तर, जति गरे पनि हेत्छाकुप्पालाई ब्युँताउनु नसकेकोमा भने, मलाई पनि धेरै दुःख लागेको छ । तर के गर्नु ? यदि हेत्छाकुप्पालाई ब्युँताउनु सकेको भए पनि ऊ हामीजस्तै चरा हुँदैनथ्यो । ऊ ता छोरा मान्छे नै हुन्थ्यो । मान्छे नै भएपछि हेत्छाकुप्पाले विभिन्न कष्ट सहनुपर्थ्यो । फेरि, हेत्छाकुप्पा जवान भएपछि उसलाई जोडी पनि छोरीमान्छे नै चाहिन्थ्यो । तर, हेत्छाकुप्पाको लागि ता अहिले तुरुन्तै यो पृथ्वीमा सुहाउने छोरीमान्छे नै छैन । उस्लाई सुहाउने छोरी मान्छेनै नभएपछि ऊ एक्लै हुन्थ्यो, ऊ बेशाहारा हुन्थ्यो, उस्ले धेरै दुःख पाउँथ्यो । अनि के गर्नु त ? (पीडामा रुएर आँशु पुच्दै) यदि हेत्छाकुप्पा भाग्यमानी भएमा फेरि बिउँतिएर यो ठाउँमा राज्य गर्ने छ । अहिले चाहिँ हामी आ-आफ्नो बाटोतिर नै उडेर जाऔँ ।

खियामा : (स्वीकारोक्तिमा) हुन्छ, नाना । तपाईंले भनेझैँ म फेरि दक्षिणतिरै जान्छु । तपाईं पनि उत्तरतिरै जानुहोस् । तर हिउँदमा चाहिँ तपाईं लिम्चिमबुङ[५] भएर ढकमक्क फुल्नू । मगमग बासना छर्नू । त्यो वासनासँगै तावामा

---

५. मुन्दुमी फूल, जुन फूल हिमाली भेगमा फुल्छ ।

बगेर मलाई भेट्नु आउनुहोस् ल । म गोवाबुङ[६] भएर तपाईंको बाटो हेरिरहन्छु । अहिले म जान्छु है नाना ।

तायामा : लौ लौ, खियामा । जाऊ, जाऊ । तिमी गएपछि म पनि जान्छु । (ढोल र थालमा बज्छ ।)

रिसिया : कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु, कुर्मु

दुवै जना : (धर्ती, आकाश र सुप्तुलुङलाई ढोग्दै)

हेन्खाबोब्बी मामुनाबेन
निनामबोब्बी मामुनाबेन
छेत्लुङ्माछ मामुनाबेन
माक्लुङ्माछ मामुनाबेन
साकुलङच्यो दिवालङच्यो
मामावाए चुनिवावो
साकोङखाया मोरिखाया
तिरिनिआ छाप्दुमिआ
केचिका पान्मुयाङका ।[७]

(रिसियाको ताल जोडजोडले बस्छ । त्यो तालमा दुवै जना सिली टिप्दै उडेर जान्छन् । केही मानिसहरू बिस्तारै सिली टिप्दै केही दृश्य सामग्रीहरू लिएर आउँछन् । सिली टिप्दै सबैले पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । दुवै जना उडेर जान्छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा विलय हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

---

६. मुन्दुमी फूल, जुन फूल तराई भेगमा फुल्छ ।

७. पृथ्वीको उत्पत्ति हुँदाखेरि
आकाशको उत्पत्ति हुँदाखेरि
दल्छिनढुङ्गाको उत्पत्ति हुँदाखेरि
वज्रढुङ्गाको उत्पत्ति हुँदाखेरि
लौ पुर्खाहरू हो
आमाकै गर्भमा
लेखान्तले लेखिदियो
मान्छे उड्ने हुँदाखेरि
हामी पनि उड्यौ है

# तेस्रो दृश्य

स्थान : तुवाचुङ
समय : दिउँसो
पात्रहरू : हेत्छाकुप्पा र चक्रङदिमा ।
घटना : हेत्छाकुप्पालाई चक्रङदिमाले बोकेर लान्छ ।

(चराचुरुङ्गीहरू चिरबिराइरहेका छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको काखमा तुवाचुङ[1] छ । बाँकी दृश्यहरू पहिलो दृश्यहरूकै निरन्तरता छ । चिहानमा हेत्छाकुप्पा सुतिरहेको छ । उस्को सबै भेषभुषा, सामग्री र गहनाहरू पहिलो दृश्यकै निरन्तरता छ ।)

हेत्छाकुप्पा : (बिस्तारै उठेर आँखा मिच्दै) आहाई...म ता भुसुक्कै पो निदाएछु । (यताउति हेरेर अनौठो मान्दै) हन, हिजोसम्म ता नानाहरू यहीँ हुनुहुन्थ्यो ! अचानक कहाँ जानुभएछ ? (भुइँमा हेर्दै) हँ ! यहाँ ता चिहान पो छ त ! फेरि, चिहानमाथि सेतो कपडाले छाएको एकपाखे छाना पनि छ ! त्यो चिहानको छानामुनि उल्टो चुङ्गेमा[2]मा जाँड पनि छ ! अझै, त्यो चिहानमाथि तीनोटा अगुल्ठो पनि छ । एउटा बुछिरोङ पनि छ । केराको पात पनि छ । एउटा कर्द पनि छ त ! (प्रसङ्ग बदल्दै) हैन, आज मैले यो के देख्नुपरेको ? (अचम्म हुँदै) यस्तो चिहान ता, हाम्रो पुर्खाहरूको पो हुन्थ्यो त ! कतै... (बेवास्ता गर्दै) आ... जेसुकै होस् । यहाँ आफूलाई कस्तो भोक लागेर

१. मुन्दुमी क्षेत्र । यो तुवाचुङ खोटाङ जिल्ला, नेपालमा पर्छ ।
२. बाँसको चुचो परेको ढुङग्रो ।

मर्ने बेला भइसक्यो । बरु, यो केराको पातलाई बोट बनाउँछु । यो केरा फलाएर पाकेपछि खान्छु । (कर्द टिपेर केराको पाततिर देखाउँदै) केरा तुरुन्तै उम्रिएर बोट हु, नत्र तँलाई यै कर्दले छिनाइदिन्छु । (रिसियाको ताल जोडजोडले बज्छ । प्रकाश बिस्तारै बिलाएर पुनः प्रकट हुन्छ । केराको पात पलाएर बोट हुन्छ । सबै आवाजहरू बिस्तारै रोकिन्छ । रमाउँदै) आहा, केर ाको पात पलाएर पनि कति छिटो बोट भयो । क्या गज्जब हुने भयो । (केराको बोटतिर कर्द देखाउँदै) केरा, आबो तँ तुरुन्तै पसाएर पाक, नत्र तँलाई यै कर्दले छिनाइदिन्छु । (रिसियाको ताल जोडजोडले बज्छ । प्रकाश बिस्तारै बिलाएर पुनः प्रकट हुन्छ । केराको बोटमा केरा पाक्छ । सबै आवाजहरू बिस्तारै रोकिन्छ । रमाउँदै) आहा, केराको बोटबाट केरा पसाएर पनि कति छिटो पहेँलै पाक्यो । (केराको बोटमा चढ्छ, तर लडिभर्छ ।) आइया ... (उठ्दै) कस्तो चिप्लो रैछ । केराको बोटबाटै लडिभरेँ । (केराको बोटमा फेरि चड्छ । केरको बोटमा खुट्टा हल्लाउँदै पाकेको केरा चुँडाएर खाँदै) आहा, यो पहेँलै पाकेको केरा खाँदा ता, कति मज्जा हुँदोरैछ । (गुडुङडुङको आवाज आउँछ । तोङवात बोकेर चक्रङदिमाको प्रवेश हुन्छ । शरीरमा मामोङतित लगाएकी छिन् । कपाल जिङ्ग्रिङ्ग परे को छ । आँखा रातो छ । शरीर मोटो छ । तोङवात भुइमा राख्छिन् ।)

चक्रङदिमा : (छेउमा आएर चेप्रे कस्दै) हेत्छाकुप्पा, मलाई सारै भोक लाग्यो । तिमीले खाएको केरा मलाई पनि देऊ न ।

हेत्छाकुप्पा : (केरा टिपेर दिँदै) चक्रङदिमा, यी लिनुहोस् केरा ।

चक्रङदिमा : (चेप्रे कस्दै) हेत्छाकुप्पा, म ता बुढी छु । केरा पनि समाउनु सक्दिन । लम्किएर तिम्रो हातले नै देऊ न ।

हेत्छाकुप्पा : (लम्किएर केरा दिँदै) ल ल । बुढी पनि हुनुहुँदो रैछ । लम्किएर नै दिउँला ।

चक्रङदिमा : (चेप्रे कस्दै) आलाङ्ने[३] हेत्छाकुप्पा, आलाङ्ने । (आकाश गडगडाउँछ । हुरी चल्छ । बिजुली चम्किन्छ । चट्याङ पर्छ । हेत्छाकुप्पालाई लडाइ झारेर तोङवातमा लगाएर बोकेर लान्छिन् ।)

हेत्छाकुप्पा : (रुँदै उफ्रिँदै) नाई... नाई... मलाई छोडिदिनुहोस् । मलाई छोडिदिनुहोस् ।

चक्रङदिमा : चुपचाप यो तोङवात भित्र बस् । (तोङवातबाट हेत्छाकुप्पा उफ्रिएर झर्छ । चक्रङदिमा लड्छिन् । हेत्छाकुप्पा भाग्छ । उठ्दै) आइया... मरेँ, मरेँ । (हेत्छाकुप्पा भागेर केराको बोटमा चढ्छ, तर लडिझर्छ ।) आइया ... (उठ्दै) कस्तो चिप्लो रैछ । केराको बोटबाटै लडिझरेँ । (केराको बोटमा फेरि चढ्छ ।)

हेत्छाकुप्पा : (केरा बोटमा चडेर खुट्टा हल्लाउँदै पाकेको केरा चुँडाएर खाँदै) आहा, क्या मिठो पाकेको केरा ।

चक्रङदिमा : (उठेर लुगा टकटकाउँदै) हेत्छाकुप्पा, तिमीले म बुढीलाई लडायौ ? मेरो जिउ पनि थिलथिलो पारिदियौ । तर, केही गुनासो छैन । (शरीर छाम्दै) आईया, कस्तो सारो जिउ दुखेको ! (प्रसङ्ग बदल्दै) तर हेत्छाकुप्पा म ता भोकले मर्नु आँटेँ । तिमीले खाएको केरा मलाई पनि देऊ न ।

हेत्छाकुप्पा : (केरा खाँदै) अहँ, हुँदैन । फेरि तपाईंले अघि जस्तो तोङ्वातमा लाएर लानु मात्रै हुन्छ ।

चक्रङदिमा : (चेप्रे कस्दै) त्यसो होइन, हेत्छाकुप्पा । मैले ता, तिमीलाई नातिजस्तो लागेर पो बोकेको त । तिमी ता मेरो नातिजस्तो छौ । तिमीलाई तोङवातमा लगाएर मैले बोक्नु पनि नपाउनु ?

हेत्छाकुप्पा : (केरा खाँदै) लौ, लौ ठीकै छ । आबो, तपाईंले मलाई नाती जस्तो लागेर बोक्नु मात्र भएको भए, ठीकै छ । म फेरि तपाईंलाई केरा दिउँला । तर, अघिजस्तो लडाएर मलाई लानुचाहिँ पाइँदैन नि !

---

३. शिर झुकाएर गरिएको आभार ।

चक्रङदिमा : (चेप्रे कस्दै) भैहाल्छ नि हेत्छाकुप्पा । म तिमीलाई लान्न । बरु, मलाई छिटो केरा देऊ न ।

हेत्छाकुप्पा : लौ, लौ । म तपाईंलाई पाकेकै केरा दिन्छु । (पाकेको केरा चुडाएर दिँदै) लु लिनुहोस्, पाकेको केरा ।

चक्रङदिमा : (केरा थाप्दै) आलाङ्ने, आलाङ्ने । (चक्रङदिमाले केरा लिए जस्तो गरेर हेत्छाकुप्पालाई लडाइ झारेर तोङवातमा लगाएर लान्छिन् । आकाश गड्गडाउँछ ।)

हेत्छाकुप्पा : (आत्तिँदै) दिमो[४]... दिमो...। मलाई छोडिदिनुहोस् । मलाई छोडिदिनुहोस् ।

चक्रङदिमा : (हेत्छाकुप्पालाई लाँदै) बल्ला मेरो फन्दामा परिस् । आबो जति कराए पनि तेरो हुनेवाला केही छैन ।

हेत्छाकुप्पा : (आत्तिँदै) दिमो, दिमो मलाई भुइँमा राखिदिनुहोस् । मलाई छिटो भुइँमा राखिदिनुहोस् ।

चक्रङदिमा : (हप्काउँदै) के भयो ? नकराई बस्, नत्र तेरो ... ।

हेत्छाकुप्पा : (आत्तिँदै) गुहु आयो । गुहु आयो । गुहु आइसक्यो । छिटो राख्नुस्, नत्र तपाईंकै टाउकोमा हगिदिन्छु । छिटो राख्नुहोस्, गुहु आइसक्यो ।

चक्रङदिमा : (हत्तारिँदै) हन, यो के भन्छ ?

हेत्छाकुप्पा : (आत्तिँदै) गुहु आइसक्यो भनेको ? यहीँ हगिदिऊँ ?

चक्रङदिमा : (तोङवात राख्दै) ए ए पर्खी है, पर्खी । तोङवातमा नहग है । तोङवात राख्दै छु । (तोङवात राख्दाराख्दै हेत्छाकुप्पा उफ्रिएर जाँदा चक्रङदिमा लड्छिन् । उठ्दै) आइया... मरेँ, मरेँ । (हेत्छाकुप्पा भागेर केराको बोटमा चढ्छ, तर लडिझर्छ ।)

हेत्छाकुप्पा : आइया ... (उठ्दै) कस्तो चिप्लो रैछ । केराको बोटबाटै लडिझरेँ । (केराको बोटमा फेरि चडेर खुट्टा हल्लाउँदै पाकेको केरा चुँडाएर खाँदै) आहा...क्या मिठो पाकेको केरा ।

---

४. बजू ।

चक्रङदिमा : (हेत्छाकुप्पाको छेउमा गएर) हेत्छाकुप्पा, गुहु आयो भनेर तिमीले मलाई झुक्याएर बाटोबाटै फर्किएर पनि फेरि केरा खानु थाल्यौ ? मचाहिँ भने भोकले मर्नु आँटे । (कान्छी औँला देखाउँदै) हेर न हेत्छाकुप्पा, तिमीले लडाउँदा मेरो देब्रे हातको कान्छी औँला नै भाँचियो । (शरीर छाम्दै) आइया !

हेत्छाकुप्पा : (अचम्म मान्दै) हँ ! तपाईंको औँला भाँचियो रे ?

चक्रङदिमा : (कान्छी औँला देखाउँदै) हो त, मेरो औँला नै भाँचियो ।

हेत्छाकुप्पा : (लम्किएर हेर्दै) हो र ! खै हेरौँ ?

चक्रङदिमा : (देब्रेहातको औँला देखाउँदै) ल हेर । (हेत्छाकुप्पालाई लडाएर हातखुट्टा बाँध्छिन् । तोङवातमा लाउँछिन् । आकाश गडगडाउँछ । बिजुली चम्किन्छ ।)

हेत्छाकुप्पा : (चिच्याउँदै) नाई नाई, बचाऊ...बचाऊ...बचाऊ आमा, आपा । बचाऊ आमा । बचाऊ नाना । मलाई छोडिदेऊ चक्रङदिमा । मलाई छोडिदेऊ ।

चक्रङदिमा : (हेत्छाकुप्पालाई बोकेर लाँदै) हेत्छाकुप्पा, तँ ता खुब चलाख भएर भाग्थिस् नि ! बल्ला तेरो हात-खुट्टा बाँधिदिएँ । अब कसरी भाग्दो रैछस्, हेरौँ न म पनि । तैँले मलाई खुब दुःख दिएको थिइस् नि ! लु आबो भाग् । सधैँ चलाख भएर भाग्छस् ?

हेत्छाकुप्पा : (चिच्याउँदै) नाई आमा । मलाई बचाऊ । मलाई बचाऊ आमा । मलाई बचाऊ नाना ! (चक्रङदिमाले बोकेर हेत्छाकुप्पालाई लान्छिन् । हेत्छाकुप्पा रोइरहेको हुन्छ । आकाश गडगडाउँछ । हुरी चल्छ । बिजुली चम्किन्छ । चट्याङ पर्छ । केही मानिसहरू पछाडिको दृश्य सामग्रीहरू लिएर बिस्तारै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा विलय हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

# चौथो दृश्य

स्थान : चक्रङदिमाको घर
समय : दिउँसो
पात्रहरू : हेत्छाकुप्पा, चक्रङदिमा, भ्फोङ्मा, पक्का र निछा ।
घटना : हेत्छाकुप्पाले भ्फोङमालाई मारेर भाग्छ ।

(चराचुरुङ्गीहरू चिरबिराइरहेका छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । घनाजङ्गलमा ओडारहरू छन् । ओडारको एक छेउमा अगेना छ । अगेनाको छेउमा दाउराहरू छन् । घरको सामग्रीहरू लथालिङ्ग छन् । एक छेउमा जालीवाला कोठा छ । हाँडी घोप्टिएको छ । एकछेउमा ओख्ली छ ।)

चक्रङदिमा : (नेपथ्यमा) भ्फोङ्मा, भ्फोङ्मा । ए...भ्फोङ्मा ।

भ्फोङ्मा : (नेपथ्यमा) जेऊ[1] आमो । (हेत्छाकुप्पालाई तोङवातमा बोकेर चक्रङदिमाको प्रवेश हुन्छ । हेत्छाकुप्पा चुपचाप बसेको छ । दुवैको वेशभूषा, गहना र सामग्रीहरू तेस्रो दृश्यकै निरन्तरता छ ।)

चक्रङदिमा : (हेत्छाकुप्पालाई राख्दै) भ्फोङ्मा, यता आऊ त ।

भ्फोङ्मा : (नेपथ्यमा) किन आमो ?

चक्रङदिमा : (लुगाले पसिना पुछ्दै) आज मैले के ल्याएको छु ?

भ्फोङ्मा : (भित्रबाट आउँदै) आएँ...आएँ, आमो । (भ्फोङ्माले मामोङतित[2] लगाएकी छिन्।)

चक्रङदिमा : (हेत्छाकुप्पातिर देखाउँदै) यता हेर त । आज मैले कति मिठो सिकार ल्याएको छु । ल भ्फोङ्मा, आबो तिमीले

---

१. हजुर ।
२. घाँटीदेखि खुट्टासम्मको डरलाग्दो कालो लुगा ।

अगेनामा दनदनी आगो बाल्नु । त्यो अगेनामा हाँडी बसाल्नू । त्यो हाँडीमा भकभकी तेल उमाल्नू । त्यो तेलमा डुबाएर यो हेत्छाकुप्पालाई मार्नू । हेत्छाकुप्पाको तात्तातो रगतलाई भाँडामा लगाएर ढोकाको छेउमा राख्नू । उसको तुन्तुरेलाई चाहिँ ढोकाको शिरमा झुन्डाउनू । उसको शरीरलाई चाहिँ काटकुट पारेर हाँडीमा पकाउनू । म तिम्रो चक्का[३] र दिक्कु[४]लाई लिएर नाच्दै आएर पहिला हेत्छाकुप्पाको तुन्तुरे खान्छु । त्यसपछि हेत्छाकुप्पाको तातो रगत खान्छु । अन्तिममा चाहिँ चक्का र दिक्कुसँग हेत्छाकुप्पाको मासु खानुपर्छ । (हेत्छाकुप्पालाई दुलोमा थुन्छिन् ।)

झोङ्मा : (स्वीकारोक्तिमा) हुन्छ आमो ।

चक्रङदिमा : (बाहिरिँदै) झोङ्मा, अहिले म मावलो गएँ है ।

झोङ्मा : (स्वीकारोक्तिमा) हुन्छ आमो । तपाईंले भनेझैँ गर्छु । बरु भरै चाहिँ छिट्टै आउनुहोस् है ।

चक्रङदिमा : (बाहिरिँदै) लौ लौ, अहिले म गएँ । तिम्रो काम गर ।

झोङ्मा : (स्वीकारोक्तिमा) हुन्छ आमो, म मेरो काम गर्छु । (अगेनामा आगो बाल्छिन् । हाँडीमा तेल उमाल्छिन् । दुलोबाट निकालेर हेत्छाकुप्पालाई ल्याउँछिन् । उनको कपाल छाम्दै) हेत्छाकुप्पा, आबो तिमी छिट्टै मर्दै छौ । तर, तिम्रो त्यो घुङ्ग्रिङ परेको लामो न लामो कपाल मलाई मन पर्‍यो । यति राम्रो तिम्रो कपाल तिमीले कसरी बनायौ ?

हेत्छाकुप्पा : (हरेस मुद्रामा कपाल छाम्दै) खै कसरी भनौँ र ? आबो, सधैँ मेरो आमाले मलाई ओख्लीमा उँधोमुन्टो पार्नुहुन्थ्यो । अनि मेरो कन्डोमाथिबाट भकभकी उम्लिरहेको तेल खनाइदिनुहुन्थ्यो । पछि बिस्तारै मेरो कपाल यसरी आफैँ घुङ्ग्रिङ परेर लामो न, लामो भयो ।

झोङ्मा : (उत्साहित हुँदै) ए... त्यसो भए, मेरो पनि कपाल

---

३. आमाको भाइ ।

४. आमाको दाजु ।

तिम्रैजस्तो घुङग्रिङ परेको लामो न लामो पार्नुपर्‍यो । त्यसको लागि तिम्रो आमाले तिमीलाई पारेजस्तो मेरो कन्डोमाथि पनि तेल खनाइदेऊ है ? कतै मेरो पनि तिम्रोजस्तै कपाल हुन्छ कि ?

हेत्छाकुप्पा : हुन्छ नि, किन नहुनु ? बरु, त्यसको लागि तिम्रो सबै लुगा फुकाऊ । (ओख्लीतिर देखाउँदै) उ त्यो ओख्लीमा तिम्रो टाउको उँधोमुन्टो पार त । (भोङ्माले सबै लुगा फुकालेर ओख्लीतिर जान्छिन् ।)

भोङ्मा : लु हेत्छाकुप्पा । (खुसी हुँदै ओख्लीभित्र उँधोमुन्टो पारेर) मैले सबै लुगा फुकाएर ओख्लीमा उँधोमुन्टो पारेर कन्डो ठाडो पारिसकेँ । लु आबो, मेरो कन्डोमाथि तेल खनाइदेऊ ।

हेत्छाकुप्पा : हुन्छ, हुन्छ । (तेल उचालेर कन्डोमाथि खनाउँदै) तिमी नआत्तिऊ न । म तिम्रो कन्डोमाथिबाट तेल खनाउँदै छु ।

भोङ्मा : (छटपटिएर आत्तिँदै) आया...या... आथा... था...था... मरेँ...मरेँ... मरेँ... आमो... मरेँ...। (आकाश गड्गडाउँछ । बिजुली चम्किन्छ । चट्याङ पर्छ । आवाजहरू बिस्तारै कम हुन्छ ।)

हेत्छाकुप्पा : (रमाउँदै) खाइस् कि ? खुब तेरो आमाको आज्ञा मानेर मलाई मार्नु खोज्थिस् नि ! आबो तँ आफैं मरिस् । (भोङ्मा छटपटाउँदै मर्छिन् । हेत्छाकुप्पाले आफ्नो लुगा फुकालेर कुनामा लुकाएर राख्छ । भोङ्माको लुगा लगाउँछ । भोङ्माको मासु काटेर हाँडीमा पकाउँछ । रगतलाई भाडामा लगाएर ढोकाको छेउमा राख्छ । भोङ्माको देब्रेहातको कान्छी औँला काटेर तुन्तुरेजस्तो बनाएर ढोकाको शिरमा सिउरिन्छ । सबै आवाज बिस्तारै रोकिन्छ ।) अँ भोङ्माको मासु काटकुट पारेर हाँडीमा ता पकाएँ । भोङ्माको रगतलाई पनि भाँडामा लगाएर ढोकाको छेउमा राखिसकेँ । आबो, यो भोङ्माको देब्रेहातको कान्छी औँलालाई पनि मेरो तुन्तुरे जस्तो पारेर ढोकाको शिरमा सिउरिसकेँ ।

चक्रङदिमा : (नाच्दै पक्का र निछ्रासँग प्रवेश गर्दै) हेत्छ्रा...कुप्पा चुयुकुम्पा, कफुची फुत्ताङ चाङकुम्पा[५] । (शरीरमा निछ्रा र पक्काले हल्लातित[६] लाएका छन् । निछ्रा सुस्त मनस्थितिको छ भने पक्का अपाङ्ग छ । चक्रङदिमाको वेशभूषा, गहना र सामग्री पहिलाकै जस्तो छ । ढोकाको शिरमा झुन्डिएको औँलालाई उफ्रिएर चुडाइ खाँदै) आहा, कति मिठो रैछ, यो हेत्छ्राकुप्पाको तुन्तुरे पनि । यो हेत्छ्राकुप्पाको तुन्तुरे ता, कुरुककुरुक पनि रैछ । (ढोकाछेउको रगततिर देखाउँदै) लौ, माइती राजाहरू, आबो लु यो हेत्छ्राकुप्पाको तात्तातो रगत पनि खाऊ ।

पक्का : (भाँडाको रगत उचालेर खाएर मुख पुछ्दै) आहा, यो हेत्छ्राकुप्पाको रगत ता निकै मिठो पो रैछ । (भाँडा चक्कालाई दिँदै) ल निछ्रा[७], तिमी पनि खाऊ रगत ।

निछ्रा : (भाँडा समाउँदै) आ...आ... आलाङ्ने, प...प...पक्का[८] । (रगत खाएर मुख पुछ्दै) हो...हो...हो त रैछ । साँ...साँ...साँच्चै यो..यो... हे...हे... हेत्छ्राकुप्पाको र...र...रगत ता, नि...नि...निकै मी...मी...मिठो पो रैछ । (चक्रङदिमालाई दिँदै) ल...ल... प...प... पक्का यी तपाईं पनि खानुहोस् ।

चक्रङदिमा : (भाँडाको रगत समाउँदै) आलाङ्ने निछ्रा, आलाङ्ने । (भाँडाको रगत खाएर मुख पुछ्दै) आहा ! साँच्चै यो हेत्छ्राकुप्पाको तात्तातो रगत कति धेरै मिठो रैछ । पक्का, निछ्रा आबो मासु खाउँ है ।

पक्का/निछ्रा : (स्वीकारोक्तिमा) अँ..., हु...हुन्छ । आबो मासु पाकेको छ भने ढिलो नगरौँ । फेरि मासु सेलाउँछ ।

चक्रङदिमा : (डबका ल्याएर खान पस्काउँदै) झोङ्मा, चक्का र दिक्कुलाई गुन्द्री ओछ्याइ दे । अनि मासु खानुको लागि

---

५. यसको ठ्याक्कै अर्थ छैन । तर हेत्छ्राकुप्पा चुयुकुम्पा, उसको तुन्तुरे चुडाइ खाऊँ भनेको हो ।

६. घाँटीदेखि खुट्टासम्मको डरलाग्दो कालो लुगा ।

७. आफूभन्दा सानो बैनी वा भाइ ।

८. आफूभन्दा ठुली दिदी वा दाजु ।

ढुङ्ग्रोमा हात धुने पानी दे । (हेत्छाकुप्पाले बाँसको ढुङ्गोमा पानी सारेर पक्का र निछालाई दिन्छिन् ।)

पक्का : (पानी समाउँदै) आलाङ्ने भान्जी । (हेत्छाकुप्पाले थाकलको गुन्द्री ल्याएर ओछ्याउँछ । पक्का र निछा हात धुएर गुन्द्रीमा बस्छन् ।)

चक्रङदिमा : (डबकामा मासु पस्किएर दिँदै) झोङ्मा, यो डबकाको मासु दिक्कुलाई दे । (हेत्छाकुप्पाले डबकाको मासु चक्कालाई मासु दिँदै नमस्कार गर्छ ।)

निछा : (नमस्कार फर्काउँदै) आ...आ...आलाङ्ने भा...भान्जी ।

चक्रङदिमा : (आवेशमा गाली गर्दै) झोङ्मा, आज तँलाई के हुँदै छ ? (बटुकोमा मासु पस्काएर दिँदै) झोङ्मा, यो बटुकोको मासु चक्कालाई दे । (हेत्छाकुप्पाले बटुकोको मासु लगेर दिक्कुलाई दिएर नमस्कार गर्छ ।)

पक्का : (नमस्कार फर्काउँदै) आलाङ्ने भान्जी ।

चक्रङदिमा : (हप्काउँदै) झोङ्मा, आज तँ बौलाउँदै छौ कि, क्या हो ? दिक्कुलाई देऊ भन्यो, चक्कालाई दिन्छ । चक्कालाई देऊ भन्यो, दिक्कुलाई दिन्छ, सिमित्मा[९] ।

पक्का : (डबका र बटुकोको मासु साट्दै) भइहाल्यो नि त ! हामी मिलाएर खाइहाल्छौँ नि ! किन व्यर्थैमा भान्जीलाई गाली गरेको ? आबो भान्जीले राम्रो सुन्नुभएन होला । कहिलेकाहीँ ता, यस्तो गल्ती जसको पनि भइहाल्छ नि !

निछा : (मासु खाँदै) त्यै... त... भ...भ...भनेको । जे...जे नहुनु थियो, त्यो...त्यो भइसक्यो । भा...भा...भान्जीलाई गाली गरेर का...का...काम बन्छ ?

चक्रङदिमा : (मासु पस्काउँदै) लौ लौ । तिमीहरूको सुनको भान्जीलाई आकाशमा नै चढाएर राख न । यस्तै ताल हो भने, कुन दिन यसले हामीलाई नै स्वाहा पार्छ, अनि थाहा पाउँछौ !

पक्का : (मासु खाँदै) लु भो, आबो नकराऊ । बरु, तिमी पनि

---

९. महिला मृतात्मा ।

भान्जीसँग मासु खाऊ । हेत्छाकुप्पाको मासु कति मिठो भइरहेको बेलामा भान्जीलाई नै उल्टै गाली ?

चक्रङदिमा : (मासु पस्काएर खाँदाखाँदै रोकिएर) हँ ! अचानक किन निद्रा लाग्यो ? म ता एकछिन सुत्छु है ।

निछा : (निद्राले लठ्ठ हुँदै) म...म...मलाई पनि क...क...कस्तो रिङ्गटा पो ला...ला...लागेर आयो । म...म...म पनि एकछिन सु...सु...सुत्छु है ।

पक्का : (निद्राले लठ्ठ हुँदै) लौ, लौ । सुत सुत । म मात्रै मासु खान्छु । (थाहा नपाई त्यहीँ निदाउँछ ।)

हेत्छाकुप्पा : (चक्रङदिमाको छेउमा बिस्तारै आएर टाउको हल्लाउँदै) आबो ता खाइस् कि । खुब मलाई मारेर मेरो मासु खानु खोज्थिस् नि ! बल्ला भेटिस् । आबो, आफ्नै छोरीको तात्तातो रगत र मासुले मात्दा त तँलाई खुब मज्जा लाग्यो होला नि ! (झोङ्माको लुगा फुकाएर आफ्नो लुगा लगाउँछ । दर्शकतिर हातको मास, काइयो, खरानी र डिम्बा देखाउँदै) भरै यो मास, यो बाँसको काइयो, यो खरानी र यो डिम्बा चाहिन्छ । (घरको धुरीमा चढेर जिस्काउँदै) चक्रङ...ऽऽऽ... धिप...ऽऽऽ... धिप, छा...ऽऽऽ...क... ऽऽऽ...चा...ऽऽऽ...चा...ऽऽऽ..., चक्रङ... ऽऽऽ ...धिप... ऽऽऽ ...धिप, छा... ऽऽऽ ... क... ऽऽऽ ...चा...ऽऽऽ ... चा...ऽऽऽ...।[१०]

चक्रङदिमा : (बिस्तारै यताउति हेरेर अचम्म मान्दै) हेत्छाकुप्पा ! तँ ? तँ, अझै बाँचेको छस् ? मरेको छैनस् ?

हेत्छाकुप्पा : (गिज्याउँदै) के गर्छस् त, चक्रङदिमा ? तैँले मलाई मारेर मेरो मासु खानु खोज्थिस् । तर मैले ता झोङ्मालाई मारेर तँलाई नै तेरो छोरीको मासु मातुन्जेल खानु दिएको थिएँ । तर तँलाई थाहै भएन । आबो के गर्छस् तँ ? चक्रङ...ऽऽऽ... धिप...ऽऽऽ... धिप, छा...ऽऽऽ...क... ऽऽऽ...चा...ऽऽऽ...चा...ऽऽऽ..., चक्रङ... ऽऽऽ ...धिप... ऽऽऽ ...धिप, छा... ऽऽऽ ... क... ऽऽऽ ...चा... ऽऽऽ ... चा...ऽऽऽ...

---

१०. यसको वास्तविक अर्थ छैन् । तर यो वाक्यले जिस्काएर चकङधिकमा वच्चाको मासु खाने भनेको हो ।

चक्रङदिमा : (आवेशमा झम्टिँदै) हेत्छाकुप्पा, तैँले झोङ्मालाई मारेर मलाई नै मेरो छोरीको मासु खुवाइस् । तँलाई आज नमारी कहाँ छोड्छु र ?

हेत्छाकुप्पा : (लोपारेर धुरीबाट भाग्दै) ला... मेरो गुहुलाई मार । चक्रङऽऽऽ... धिप...ऽऽऽ... धिप, छा...ऽऽऽ...क... ऽऽऽ...चा...ऽऽऽ...चा...ऽऽऽ..., चक्रङ... ऽऽऽ ...धिप... ऽऽऽ ...धिप, छा... ऽऽऽ ... क... ऽऽऽ ...चा... ऽऽऽ ... चा...ऽऽऽ... (खेद्दै चक्रङदिमा पनि बाहिरिन्छिन् ।)

चक्रङदिमा : (नेपथ्यमा) हेत्छाकुप्पा, तँ कहाँ पुगिस् ? (आत्तिँदै) आइया...ऽऽऽ... (लामो स्वरमा) हेत्छाकुप्पा...ऽऽऽ...तँ पापी, तँ असत्ती । मैले तेरो के खाइदिएको थिएँ र मेरो बाटोमा कालो मास छरेर मलाई खोल्सामा लडाइस् ? तँ कहाँ पुगिस् हेत्छाकुप्पा...ऽऽऽ...?

हेत्छाकुप्पा : (नेपथ्यमा) म ता यहाँमाथि तुवाचुङ[११]मा छु है...ऽऽऽ... तुवाचुङ्मा, मेरो जन्मस्थानमा । मलाई मार्छस् भने, छिटो आइज है...ऽऽऽ..., चक्रङ...ऽऽऽ... धिप...ऽऽऽ... धिप, छा...ऽऽऽ...क... ऽऽऽ...चा...ऽऽऽ...चा...ऽऽऽ..., चक्रङ... ऽऽऽ ...धिप... ऽऽऽ ...धिप, छा... ऽऽऽ ... क... ऽऽऽ ...चा... ऽऽऽ ... चा...ऽऽऽ...

चक्रङदिमा : (नेपथ्यमा) तँलाई ? तँ त्यो तुवाचुङमा छस् ? तँलाई नमारी ता, म कहाँ छोड्छु र ? (अलमलिँदै) हँ...फेरि बाँसको काँइयो मतिर फ्याँकेर बाटो छेकिस् ? हेत्छाकुप्पा...ऽऽऽ...म ता फेरि तैँले मतिर काँइयो फ्याँक्दा बाँसघारी भएर अल्मलिएँ है...ऽऽऽ...। तँ कहाँ छस्, हेत्छाकुप्पा ? (आकाश गड्गडाउँछ । हुरी चल्छ । चट्याङ पर्छ । केही मानिसहरू पछाडिको दृश्यको सामग्रीहरू लिएरबिस्तारै नाच्दै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा विलय हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

---

११. माझकिरातको खोटाङ जिल्लामा अवस्थित मुन्दुमी धार्मिक स्थल, हलेसीको छेउमा पर्छ ।

# पाँचौं दृश्य

स्थान : दुधकोशी किनार
समय : बेलुका
पात्रहरू : हेत्छाकुप्पा र चक्रङदिमा
घटना : चक्रङदिमाले हेत्छाकुप्पालाई तुवाचुङमा खेद्छिन् ।

(समुद्रको आवाज आइरहेको छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । दुधकोशीमा बाडी आइरहेको छ । दुधकोशीको किनारमा भोर्ला, वाहिबुङ[1], बाँसघारी र केरा घारीहरू छन् ।)

हेत्छाकुप्पा : (नेपथ्यमा लामो स्वरमा) म ता अघि नै खोवालुङ[2]मा आएको छु है । मलाई मारेर खाने नै भए छिटो आइज है । तँ आउन्जेल म तँलाई यही खोवालुङ नै पर्खिरहन्छु...ऽऽऽ...। चक्रङ...ऽऽऽ... धिप...ऽऽऽ... धिप, छा...ऽऽऽ...क... ऽऽऽ...चा...ऽऽऽ...चा...ऽऽऽ..., चक्रङ... ऽऽऽ ...धिप... ऽऽऽ ...धिप, छा... ऽऽऽ ... क... ऽऽऽ ...चा... ऽऽऽ ... चा...ऽऽऽ...

चक्रङदिमा : (नेपथ्यमा) तँ सुरुत्वा[3]लाई ? कहाँचाहिँ भाग्छस् र ! तँ जहाँ गए पनि तँलाई मारेर नखाई छोड्दिनँ । (अल्मलिँदै लामो स्वरमा) तैँले मलाई सताउनैसम्म सताइस् है ! हेत्छाकुप्पा, तँ कहाँ पुगिस् ? म ता तैँले मतिर खरानी हान्दा भएको कुहिरोमै फेरि अल्मलिएँ । त कहाँ पुगिस् ऽऽऽ... ?

---

१. मुसुरे कटुस प्रजातिको रुख ।

२. माझकिरातको खोटाङ जिल्लामा अवस्थित मुन्दुमी गुफा, यो हलेसीको छेउमा पर्छ ।

३. अलछिच्ना ।

हेत्छाकुप्पा : (नेपथ्यमा लामो स्वरमा) म ता लुत्छुम्बुलुङ[४]मा आएर मेरो सामेत[५] खोज्दै छु है...ऽऽऽ... मलाई मारेर खान्छस् नै भने, छिटो आइज है । चक्रङ...ऽऽऽ...धिप...ऽऽऽ...धिप, छा...ऽऽऽ...क...ऽऽऽ...चा...ऽऽऽ...चा...ऽऽऽ... चक्रङ...ऽऽऽ...धिप...ऽऽऽ...धिप, छा...ऽऽऽ...क... ऽऽऽ ... चा...ऽऽऽ... चा...ऽऽऽ...,

चक्रङदिमा : (प्रवेश गर्दै) तँलाई, तँ हेत्छाकुप्पालाई ? तैँले आज मलाई दुःख दिनुसम्म दिइस् है ? आजचाहिँ भने, तँलाई नमारी छोड्दिनँ । तँलाई... (अल्मलिँदै) फेरि तैँले मतिर डिम्बा हानेर योङवामा ठुलो बाढी ल्याएर मलाई बाटो छेकिस् ? तैँले मलाई दुःखले बाँचेर खानु नदिने भइस्, हल्लावा[६] ? आबो त्यो योङवा तरेर म कसरी आऊँ...ऽऽऽ...? (चक्रङदिमाको वेशभूषा, गहना र सामग्री दृश्य तीनकै जस्तो निरन्तरता छ ।)

हेत्छाकुप्पा : (नेपथ्यमा जिज्याउँदै) त्यो योङवा[७]लाई फुत्त हामफालेर आइज न । त्यो योङवामा हामफालिस् भने, सजिलै नाघिहाल्छस् ! आबो, मलाई मारेर खान्छस् भने, छिटो योङवामा हामफालेर आइज है । तेरो तागत हेरौँ न, काँतर ! यो तेरो लागि अग्निपरीक्षा नै भयो । चक्रङ...ऽऽऽ...धिप...ऽऽऽ...धिप, छा...ऽऽऽ...क...ऽऽऽ... चा...ऽऽऽ...चा...ऽऽऽ... चक्रङ...ऽऽऽ...धिप...ऽऽऽ...धिप, छा...ऽऽऽ... क...ऽऽऽ...चा...ऽऽऽ... चा...ऽऽऽ...,

चक्रङदिमा : (लामो श्वास फेर्दै आवेशमा) हेत्छाकुप्पा, तँ सुरुत्वाले मलाई यो योङवा तर्ने चुनौती दिएको ? आज तँलाई जसरी भए पनि मारेर खाइनँ भने, म पनि चक्रङदिमा होइन, बुझिस् ।

---

४. माझकिरातको खोटाङ जिल्लामा अवस्थित मुन्दुमी धार्मिक स्थल, सावा साकेला मन्दिरमुनि पर्छ ।
५. गोत्र ।
६. मुन्दुमी युवकको मृतात्मा ।
७. माझकिरात भएर बग्ने दुधकोशी ।

हेत्छाकुप्पा : (नेपथ्यमा) लु आइज, तेरो शक्ति भएर मलाईं मारेर खा । तँलाई चुनौती नै भयो । लु, तेरो शक्ति देखा त । कत्तिको रैछस् ?

चक्रङदिमा : हेत्छाकुप्पा, तँलाई नमारी कहाँ छोड्छु र ? (आवेशमा दौडिएर दुधकोशीमा हामफाल्छिन् । आकाश गड्गडाउँछ । चट्याङ पर्छ । नेपथ्यमा आत्तिँदै) बचाऊ...ऽऽऽ... बचाऊ...ऽऽऽ..., मलाई बचाऊ...ऽऽऽ... मलाई योङवाले बगाएर लाँदै छ है । मलाई बचाऊ, छिटो बचाऊ । मलाई बचाऊ...ऽऽऽ...बचाऊ...ऽऽऽ...बचाऊ...ऽऽऽ...। (आत्तिँदै) मलाई बचाऊ...ऽऽऽ... (पानीमा डुबेको आवाज आउँछ । आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

हेत्छाकुप्पा : (प्रवेश गर्दै) आज भने खाइस् कि ? खुब तैँले मलाई मारेर खानु खोज्थिस् नि ! योङवामा डुबेर तँ आफैँ मरिस् । तेरो अत्याचार सहँदासहँदा पेत्तु भएको थिएँ । बल्ला तँलाई योङवाले बगाएर लग्यो, खाइस् कि ? अबचाहिँ बल्ला म ढुक्कले बस्नु पाउने भएँ । (बिस्तारै साकेलाको तालमा ढोल र झ्याम्टा बज्न थाल्छ । मनोवादमा) आबो ता सधैँ यसरी नै डुलेर बस्नुभन्दा त, बरु म मेरै प्यारो खोवालुङमै गएर बस्छु । जीवन चलाउन पहिलाझैँ खेतीपाती गरेर बस्छु । तिर्खा लाग्यो भने पहिलाझैँ तालितले पहराको ढुङ्गा छेडेर पानी निकालेर खान्छु । भोक लाग्यो भने पहिलाझैँ एउटै रुखमा धेरै प्रकारको फलफूलहरू फलाएर खान्छु । रमित हेर्नु मन लाग्यो भने पहिलाझैँ वापा[८]मा चढेर संसार हेर्छु । अनि मेरो पुर्खाहरूले झैँ म पनि खोवालुङ[९]मा निरन्तर राज्य गर्छु । खोवालुङलाई

---

८. भाले ।

९. माझकिरातको खोटाङ जिल्लामा अवस्थित मुन्दुमी धार्मिक स्थल, हलेसी ओडार । यो मुन्दुमी संस्कारमा अनिवार्य मुन्दुमको माध्यमबाट यहाँ पुग्नै पर्छ ।

सबल राज्य बनाउँछु । अझै, म शक्तिशाली भएर पहिलाझैँ सबैलाई जितेर बस्छु । म पनि दिलिबुङ र पातेसुङको एक्लो छोरा हेत्छाकुप्पा पो हुँ त, मलाई कसले के गर्नु सक्छ र ! (लामो यात्राको तालमा साकेलाको झ्याम्टा-ढोल बज्नु थाल्छ ।)

साकेला धुन: ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक
ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक

(केही मानिसहरू पछाडि दृश्यको सामग्रीहरू लिएर सिली टिप्दै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । दुधकोशीलाई फर्किएर हेरी अगाडि बढ्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा विलय हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

# छैटौं दृश्य

स्थान : हेत्छाकुप्पाको घर
समय : दिउँसो
पात्रहरू : हेत्छाकुप्पा, रिनाखा र साकुमा
घटना : खाना खाएर हेत्छाकुप्पा र साकुमा सुत्छन् ।

(चराचुरुङ्गीहरू चिरबिराइरहेका छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको काखमा तुवाचुङ छ । तुवाचुङमुनि योङवामा बगिरहेको छ । तुवाचुङको घनाजङ्गलमा ओडारहरू छन् । ओडारहरूको वरिपरि वाहिबुङ[1], बाँसघारी, भोर्ला र केरा घारीहरू छन् । ओडारको भित्तामा ढोल, झ्याम्टा, सिलिमी[2], पोमी[3] र तालित[4] झुन्डिएको छ । एक कुनामा बाँसको लिङ्गो गाडिएको छ । त्यो लिङ्गोको टुप्पोमा सेतो ध्वजा छ । त्यो लिङ्गोको फेदमा भोर्लाको पातमाथि साकेलुङ[5], सोलोन्वा[6], अदुवा र खुर्मी राखिएको छ । यसको एक छेउमा सुप्तुलुङ[7] छ । त्यो सुप्तुलुङबाट धुवाँ आइरहेको छ । यसको छेउमा तान, चर्खा, कपास, धागो र कपडा

---

१. मुन्दुमी रुख ।
२. मुन्दुमी सिलिमी ।
३. मुन्दुमी चौरीको पुच्छर ।
४. बाँसको भाटाबाट बनाइएको गुलेली ।
५. साकेला शिला । यसलाई उभौली र उद्यौलीमा धुमधामसहित पूजा गरिन्छ ।
६. चिण्डोभित्र पवित्र पानी, तितेपाती, मर्चा मिसाइएको मुन्दुमी पानी ।
७. मुन्दुमी चुला ढुङ्गा । यस सुप्तुलुङमा खम्बूहरूको जन्मदेखि मृत्युसम्मको मुन्दुमहरू प्रदर्शन गरिन्छ ।

छ । करिव १६ वर्षको हेत्छाकुप्पा कुनामा सुतिरहेको छ । आवाजहरू बिस्तारै रोकिन्छ । सुन्दर हेत्छाकुप्पा ओछ्यानबाट बिस्तारै उठ्छ । हेत्छाकुप्पाले शरीरमा लोछुम[८] र घाँटीमा वुन्छत[९] लगाएको छ । उठेर जीउ तानाकतुनक पार्छ । शिरमा सायाबुङ[१०] लगाउँछ ।)

हेत्छाकुप्पा : (यताउति हेरेर मनोवादमा) आजसम्म यत्रो लामो समय बित्यो, म पनि जवानी भइसकेँ । तैपनि म एक्लै छु । फेरि चिताएको काम पनि पुग्दैन । आबो ता यो मेरो शिरको सायाबुङ, यो घाँटीको वुन्छत र यो शरीरको लोछुम पनि म आफैँलाई भारी भइसक्यो । हिजो पनि मलाई के लुसा[११] लाग्यो, लाग्यो । अचम्मै । अरू दिन कति धेरै जालभरि माछा पर्थ्यो । (सरङको लोहोरा झिकेर हेर्दै) तर, हिजो जतिपल्टो योङवामामा जाल हान्दा पनि यो लोहोरा मात्रै मेरो जालमा पऱ्यो, तर माछा भने एउटै पनि परेन । घरमा खानेकुरा पनि केही थिएन । हिजो पनि भोकै सुतेँ । (आत्मा बल बढाउँदै) आ जेसुकै होस्, हिजो पनि जालमा माछा पार्नु नसक्दा भोकै भइयो । आजचाहिँ छिट्टै दाक्मिलुङतिर सिकार खेल्नु जानुपऱ्यो । नत्र फेरि हिजोकै जस्तो भोकै हुन्छु । (आफ्नो सामानहरू मिलाउँछ । काँधमा जावी[१२] र चिण्डो बोक्छ । कम्मरमा खुकुरी र चुत्युङ[१३] भिर्छ । हातमा तालित मट्याङ्ग्रा बोक्छ । रिसिया तालमा ढोल-थाल बज्न थाल्छ ।)

रिसिया धुन : कुर्मु...ऽऽऽ कुर्मु ...ऽऽऽ कुर्मु ...ऽऽऽ कुर्मु ...ऽऽऽ,

---

८. खाँडीबाट बनाइएको दौरा प्रकारको लामो पुरुष बस्त्र । यसलाई घाँटीदेखि खुट्टासम्म लगाइन्छ ।
९. मालिङगोको चोयाबाट बनाइएको मुन्दुमी गहना, यसलाई ज्ञानको प्रतिक मानिन्छ ।
१०. कपासबाट बनाइएको बाह्रहाते सेतो फेटा । यसलाई माङको शिरफूल मानिन्छ ।
११. सिकार खेल्दा लाग्ने एक प्रकारको अशुभ साइत ।
१२. सुनाखरीको धागोबाट बुनिएको जालीवाला झोला ।
१३. पानीमा पाइने सिकार बोक्ने एक प्रकारको चोयाको भाँडो, जसको मुख सानो र भुँडी ठुलो हुन्छ ।

हेत्छाकुप्पा : (उभिएर आकाश, धर्ती र सुप्तुलुङतिर ढोग्दै)
लौ दिप्पाचोपाचो दिमाचोमाचो,
आइना ङा केनछा, केन छावा
खुलासा सेत्सि पुङङाङा
हेन साका इत्दोङ,
हङलङ इत्दोङ
पुसङ इत्दोङ,
निमा चोङ्मा मेत्दोङ
उङ साया चोङ्ने
उङ रिखि चोङ्ने ।[१४]
(मुन्दुम फलाकी सकेपछि बाहिरिन्छ । लामो यात्राको तालमा साकेला सिलीको धुन बज्छ ।)

साकेला धुन : ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक
ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक
(केही क्षणपछि सरङबाट लोहोरा जमिनमा झर्छ । गुडुङडुङको आवाज आउँछ । चट्याङ पर्छ । प्रकाश बिस्तारै विलय भएर उदय हुन्छ । चट्याङको आवाज बिस्तारै रोकिन्छ । त्यो लोहोराको स्थानमा अत्यन्तै सुन्दरी करिव १५ वर्षकी महिला हुन्छ । उनको अनुहार गोलो छ । नाक थेप्चो छ । उचाइ

---

१४. लौ पुर्खाहरू ।
आज म तपाईंहरूको छोरा-नाति
सिकार खेल्न जाँदै छु ।
आबो मलाई ज्ञान
बुद्धि दिनुहोस्
बल दिनुहोस्
शक्ति दिनुहोस्
आयु दिनुहोस्
मेरो शिर उच्च रहोस् ।

मध्यमको छ । उनीले शरीरमा वातित[१५] र घाँटीमा वाछिनारी[१६] लगाएकी छिन् । साकेलाको सानो धुन बजिरहन्छ ।)

रिनाखा : (मनोवादमा) अँऽऽऽ... मेरो कारणले गर्दा हिजो पनि हेत्छाकुप्पा भोकै हुनुभयो । आज उहाँलाई कति धेरै भोक लागिरहेको होला । उहाँले भोकाएको बेलामा खानेकुरा खानु पाउनुभए कति मिठो गरी खानुहुन्थ्यो होला । (सुप्तुलुङतिर जाँदै) बरु हेत्छाकुप्पाको लागि मिठो खानेकुरा माइतबाट ल्याएर राखिदिनुपर्‍यो । भरै भोकाएर आउनुभएपछि हेत्छाकुप्पाले मिठो गरी खानुहोला । (रिनाखाले आँखा बन्द गरेर हात थाप्छिन् । आवाज जोडजोडले बज्छ । प्रकाश बिस्तारै विलय भएर पुनः उदय हुन्छ । हातमा खाना हुन्छ । त्यो खाना सुप्तुलुङको छेउमा राख्छिन् । आवाज बिस्तारै कम हुन्छ । (मनोवादमा) आबो ता हेत्छाकुप्पाको आउने बेला पनि भयो । माइतबाट खाना पनि पाएँ । मचाहिँ फेरि लोहोरा नै भएर सरङमाथि बस्छु । (साकेलाको धुन जोडजोडले बज्छ ।)

साकेला धुन : ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक
ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक
(प्रकाश बिस्तारै विलय भएर पुनः उदय हुन्छ । रिनाखा लोहोरा भएर सरङमा पसेर बस्छिन् । केही क्षणपछि थकित भएर हेत्छाकुप्पाको प्रवेश हुन्छ । उनको सबै वेशभूषा, गहना र सामग्रीहरू पहिलाकै जस्तो छ ।)

---

१५. हरियो कपडाबाट बनाइएको स्त्री वस्त्र । यसको कम्बरमाथि सानो र कम्बरमुनि फुकेको हुन्छ । यसको घाँटीमा खुर्पाको आकार अङ्कित हुन्छ । यसलाई घाँटीदेखि खुट्टासम्म लगाइन्छ ।

१६. एक प्रकारको सि माला । यसलाई माङको गहना मानिन्छ ।

हेत्छाकुप्पा : (थकित भएर बस्दै) आज पनि एउटै सिकार भेटिनँ । अरू दिन छ्याप्छ्याप्ती भेटिने सिकार आज त, सिकार मार्नु ता के, देख्नु पनि पाइनँ । (सुप्तुलुङतिर गएर अचम्म मान्दै) हँ ! खाना ? यो खाना कसरी यहाँ आयो ? (यताउति हेर्दै) म नभएको बेलामा यो खाना कसले पकाएर राख्यो ? अचम्मै पो भयो त !

साकुमा : (प्रवेश गर्दै) त्यसरी अचम्म मान्नु पर्दैन, हेत्छाकुप्पा । त्यो खाना मैले तिम्रै लागि पकाएर राखेको हुँ । (साकुमाले शरीरमा सुम्निनतित[१७], शिरमा सुनाखरीफूल, नाखमा नाबुकबुङ[१८], कानमा नाबेकबुङ[१९], घाँटीमा साक्साबुङ[२०], हातमा छिबुङ[२१] र खुट्टामा लोङबुङ[२२] लगाएकी छिन् । उनीले साक्साबुङमा बिनायो र कम्मरमा खुर्पा भिरेकी छिन् ।)

हेत्छाकुप्पा : (अचम्म हुँदै) हो र ? तपाईंले मेरो लागि त्यो खाना पकाउनुभएको ?

साकुमा : जिऊ[२३] ।

हेत्छाकुप्पा : त्यसो भए, तपाईं को हुनुहुन्छ ?

साकुमा : म साकुमा[२४] हुँ । (आकाशतिर देखाउँदै) ऊ माथि आकाशबाट आएको ।

हेत्छाकुप्पा : (स्वीकारोक्तिमा) ए ! त्यसो र पो, तपाईं ता, सुम्निमा[२५] जस्तो पो हुँनुहुँदो रैछ है !

साकुमा : होला ता नि ।

हेत्छाकुप्पा : अनि तपाईं अहिले कहाँ बस्नुभएको छ ?

---

१७. कपासमाथि भोर्लाको पातबाट बनाइएको स्त्री वस्त्र । यसको कमरमाथि सानो र कमरमुनि फुकेको हुन्छ । यसको घाँटीमा ठराइएको खुर्पाको आकृति अङ्कित हुन्छ । यसलाई सुम्निमाको वस्त्र मानिन्छ ।
१८. सुनाखरीको धागोबाट बनाइएको कुण्डल ।
१९. बेतबाट बनाइएको कुण्डल । यसलाई सुम्निमाको गहना मानिन्छ ।
२०. दुम्सीको काँडाबाट बनाइएको माला । यसलाई माङको गहना मानिन्छ ।
२१. सुनाखरीको धागोबाट बनाइएको बाला । यसलाई माङको गहना मानिन्छ ।
२२. सुनाखरीको धागोबाट बनाइएको कल्ली । यसलाई माङको गहना मानिन्छ ।
२३. हजुर, आदरार्थी महिला शब्द ।
२४. बुढीबजू ।
२५. मुन्दुमी आदर्श आमा तथा आराध्य देउता ।

साकुमा : खै कहाँ भन्नु र ! मेरो घर यही नै हो भन्ने छैन । घुम्दै जाँदा जहाँ पुग्छु, त्यहीँ बस्छु ।

हेत्छाकुप्पा : (स्वीकारोक्तिमा) ए...ऽऽऽ तपाईंले माया गरेर यति मिठो-मिठो खाना बनाइदिनुभएको छ । फेरि, अहिलेसम्म तपाईंको बस्ने घर पनि छैन भन्दै हुनुहुन्छ । त्यसो भए तपाईं पनि यो मेरै घरमा मिलेर बस्दा हुँदैन ?

साकुमा : (स्वीकारोक्तिमा) भइहाल्छ नि, किन नहुनु ?

हेत्छाकुप्पा : (साकुमाको हातमा समाएर घरमा ल्याउँदै) त्यसो हो भने लु आउनुहोस् । यहीँ मेरै घरमा मिलेर बसौँ । (साकुमालाई बसाउँदै) तपाईं यहाँ बस्दै गर्नुहोस् । म खाना पस्काउँछु है । (थालहरू ल्याएर राख्छ ।)

साकुमा : (बस्दै) भैहाल्छ नि ।

हेत्छाकुप्पा : (थालमा खाना पस्काएर दिँदै) यी खाना, साकुमा । (सत्कार गर्दै) आबो खाना खानुपर्छ ।

साकुमा : (ढोग फर्काउँदै) आलाङ्ने, आलाङ्ने ।

हेत्छाकुप्पा : साकुमा, आबो खाना खाउँ । (खाना पस्किएर खाँदै) आहा ! साकुमा, खाना ता खुब मिठो रैछ ।

साकुमा : (मुख मिठ्याउँदै) अँऽऽऽ...आबो वाकुरिसा[२६] पनि मिठो हुँदैन त, मिठो भइहाल्छ नि ! अनि हेत्छाकुप्पा तिमीलाई एउटा कुरा थाहा छ ?

हेत्छाकुप्पा : के कुरा साकुमा ?

साकुमा : यो वाकुरिसा भनेको ता पुर्ख्यौली खाना पो हो त ।

हेत्छाकुप्पा : हे, हो है साकुमा ?

साकुमा : हो त नि । (हाँसखेल गर्दै खाना खान्छन् ।)

हेत्छाकुप्पा : (स्वीकारोक्तिमा) एऽऽऽ...बल्ला थाहा भयो । (खाना खाइसकेर) हाँसखेल गर्दागर्दै रात पनि धेरै छिप्पिसक्यो । आबो सुतौँ है, साकुमा ।

साकुमा : (स्वीकारोक्तिमा) भइहाल्छ नि ! नमरे बाँचे, कालले

---

२६. समुद्री सिकारबाट बनाइएको खाना ।

साँचे, हाँसखेल ता फेरि पनि गरौँला नि !

हेत्छाकुप्पा : (कुनातिर देखाउँदै) साकुमा, तपाईं त्यो ज्याङकुमा[२७]मा सुत्नुहोस् । मचाहिँ यो सुप्तुलुङको छेउमा सुत्छु है ।

साकुमा : लौ, लौ । (हेत्छाकुप्पा सुप्तुलुङको छेउमा सुत्छ । साकुमा पनि ज्याङकुमामा सुतेजस्तो गर्छिन् । एकछिन पछि उठेर बस्छिन् । केहीछिनपछि मनोवादमा) मैले हेत्छाकुप्पालाई ढाँटेर ठुलो गल्ती गरेँ । वास्तवमा त्यो साकुरिसा मैले पकाएको होइन । (प्रसङ्ग बदल्दै) आ जेसुकै होस् । यसरी मनमा कुरा खेलाउनुभन्दा ता बरु त्यो खाना कसले पकाएर राख्यो, त्यो कुरा पो पत्ता लगाएर हेत्छाकुप्पालाई बताउँछु । आबो ता, रात पनि धेरै छिप्पिसक्यो । बरु अहिलेचाहिँ सुत्छु पो । (साकुमाले ओछ्यान लगाएर सुत्छिन् । रातिको किराहरू कराउँछन् । केही मानिसहरू पछाडिको दृश्य सामग्रीहरू लिएर बिस्तारै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा विलय हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

२७. घरको सुप्तुलुङभन्दा पछाडिको बार, जहाँ मुन्दुमी देवीदेउता र सामानहरू राखिन्छ ।

# सातौँ दृश्य

स्थान : हेत्छाकुप्पाको घर
समय : बिहान
पात्रहरू : हेत्छाकुप्पा, रिनाखा र साकुमा
घटना : खाना खाएर सुत्छन् ।

(चराचुरुङ्गीहरू चिरबिराइरहेका छन् । प्रकाश बिस्तारै रङ्गमञ्च प्रकट हुन्छ । हिमालयको काखमा तुवाचुङ छ । तुवाचुङको घनाजङ्गलमा ओडारहरू छन् । सबै दृश्यहरू छैँटौँ दृश्यको जस्तै छ । हेत्छाकुप्पा र साकुमा सुतिरहेका छन् । दुवै जनाको वेशभूषा, गहना र सामग्रीहरू दृश्य छैँटौँकै निरन्तरता छ ।)

हेत्छाकुप्पा : (उठेर शरीर मर्काउँदै) आहा ! आज कति छिटो उज्यालो भयो । आबो साकुमा उठ्नुभन्दा अगाडि नै जायाजुमतिर गएर सिकार खेलेर ल्याउनुपर्‍यो । ओछ्यानमै सिकार देख्दा त साकुमा पनि छक्क परोस् न । (तालित, जाबी र मट्याङग्रा बोकेर बाहिर जान्छ ।)

साकुमा : (उठेर यताउति हेर्दै) हन, यति बिहानै हेत्छाकुप्पा कहाँ गएछ ? (यताउति खोज्दै) हेत्छाकुप्पा, हेत्छाकुप्पा, ए हेत्छाकुप्पा । (प्रसङ्ग बदल्दै) आ जेसुकै होस् । म पनि कोठेबारीमा गएर तरकारी गोड्दै यो घरमा खाना पकाउने मान्छे पो पत्ता लगाउँछु । (साकेलाको लामो यात्राको धुन बज्छ । साकुमा डालो लिएर कोठेबारीतिर जान्छिन् । आवाज जोडजोडले बज्छ । केही क्षणपछि सरङबाट लोहोरा जमिनमा झर्छ । गुडुङडुङको आवाज

आउँछ । चट्याङ पर्छ । प्रकाश बिस्तारै विलय भएर उदय हुन्छ । चट्याङको आवाज बिस्तारै रोकिन्छ । त्यो लोहोराको स्थानमा अत्यन्तै सुन्दरी महिला हुन्छ । त्यो केटीको वेशभूषा, गहना र सामग्रीहरू दृश्य छैँटौँकै निरन्तरता छ ।)

रिनाखा : (आफैँलाई हेर्दै) म कति राम्रो छु है ! तर, के गर्नु ! कसैले पनि मेरो मनको कुरा बुझ्दैन । जे होस्, हेत्छाकुप्पाले चाहिँ मेरो मनको कुरा बुझ्छ कि ? (मस्किँदै) यदि हेत्छाकुप्पाले मेरो मनको कुरा बुझिदिए ता कति राम्रो हुन्थ्यो ? (आँखा बन्द गरेर हात थाप्छिन् । साकेलाको धुन जोडजोडले बज्छ । प्रकाश बिस्तारै विलय भएर पुनः उदय हुन्छ । हातमा खाना हुन्छ । आवाज बिस्तारै कम हुन्छ ।) अँ माइतबाट खाना पनि पाएँ । यो खानालाई सुप्तुलुङको छेउमा राखिदिन्छु । अनि, म चाहिँ फेरि लोहोरा भएर सरङमा पसेर बस्छु । भरै हेत्छाकुप्पा भोकाएर आएपछि मिठो मानेर खाओस् न, यो खाना । (सुप्तुलुङको छेउमा खाना राख्छिन् । साकेलाको धुन जोडजोडले बज्छ । प्रकाश बिस्तारै विलय भएर उदय हुन्छ । पुनः लोहोरा हुन्छिन् । सरङमा पसेर बस्छिन् । केही क्षणपछि हेत्छाकुप्पाको प्रवेश हुन्छ । उनको सबै वेशभूषा, गहना र सामग्रीहरू आगाडिकै निरन्तरता छ । आवाजहरू विलय हुन्छ ।)

हेत्छाकुप्पा : (थकित भएर बस्दै) आज पनि एउटै सिकार भेटिएन । हैन, अचेल मलाई के भइरहेको छ ? ठूलै लुसा लाग्यो कि, क्या हो ? (सुप्तुलुङको छेउमा गएर खाना हेर्दै) आ जेसुकै होस्, आज पनि साकुमाले खाना पकाइहाल्नुभएको रैछ । भोक लागेको बेलामा पहिला खाना पो खानुपर्ला । बाँकी कुरा पछि गरौँला ।

साकुमा : (डालोमा सिस्नु ल्याएर प्रवेश गर्दै) हेत्छाकुप्पा, तिमी आइपुग्यौ ?

हेत्छाकुप्पा : जेऊ[1], साकुमा । (खाना हेर्दै) अनि साकुमा, खाना ता अघि नै तयार भइसकेछ । भोक पनि लाग्दै छ । खाना पो खाऊँ कि ?

साकुमा : हुन्छ नि, हेत्छाकुप्पा । त्यसो भए, तिमीले खाना पस्क । खाना खाँदै एउटा कुरा सुनाउँछु ।

हेत्छाकुप्पा : (उत्सुकता हुँदै) के कुरा हो ? भन्नुहोस् न अहिले नै ।

साकुमा : पहिला खाना ता पस्कन । खाना खाँदै त्यो कुरा सुनाउँला नि ।

हेत्छाकुप्पा : (खाना पस्किएर दिँदै) हवस् साकुमा ।

साकुमा : (खाना खाँदै) हेत्छाकुप्पा, हिजो मैले तिमीलाई त्यो दिनको खाना मैले पकाएको भनेर ढाँटेको थिएँ । तर, वास्तवमा त्यो खाना मैले पकाएको होइन ।

हेत्छाकुप्पा : (स्पष्टीकरण माग्दै) त्यसो भए, त्यो खाना कसले पकाएको थियो त ?

साकुमा : वास्तवमा, त्यो खाना नुमाहाङमा[2]ले पकाएको हो ।

हेत्छाकुप्पा : (अचम्म मान्दै) नुमाहाङ्माले ?

साकुमा : जिऊ, त्यो खाना नुमाहाङ्माले नै पकाएको हो । तिमीलाई खुसी पार्नुको लागि मात्रै त्यो खाना मैले पकाएको भनेको थिएँ । त्यसको लागि म माफ पाऊँ ।

हेत्छाकुप्पा : आबो तपाईंले त्यो खाना नपकाए पनि बेलैमा आफ्नो गल्ती स्वीकार गरेर माफी माग्नुभयो । त्यसको लागि तपाईंलाई सधैँ माफी नै छ । तर, त्यो नुमाहाङ्मा चाहिँ कसरी आएर त्यति मिठो खाना पकायो त ?

साकुमा : हेत्छाकुप्पा, हामी नभएको बेलामा तिमीले सरङमा राखेको लोहोरा भुइँमा झऱ्यो । त्यो लोहोराबाट एउटा नुमाहाङ्मा भयो । त्यो नुमाहाङमाले खाना पकाउनु थाल्यो । खाना पकाएर राखेपछि त्यो नुमाहाङमा फेरि लोहोरा भएर नै सरङमा पसेर बस्यो ।

---

१. हजुर, आदरआर्थी पुरुष शब्द ।

२. सुन्दरी-रानी ।

हेत्छाकुप्पा : (अचम्म मान्दै) तर, त्यो लोहोरा कसरी नुमाहाङ्मा भएर खाना पकाउनु सक्छ ? विश्वास नै लागेन ।

साकुमा : आबो, मेरै आँखाले देखेको कुरालाई जस्ताको त्यस्तै भन्दा पनि तिमीलाई विश्वास लाग्दैन भने, म के नै गर्नु सक्छु र !

हेत्छाकुप्पा : तपाईंको कुरालाई विश्वास नगरेको कहाँ हो र ? तर मैले ता त्यो लोहोरा पनि कसरी नुमाहाङ्मा भएर खाना पकाउनु सक्छ भनेर जिज्ञासा पो राखेको हो त । (प्रसङ्ग बदल्दै) ल ठीक छ । त्यसो भए त्यो नुमाहाङ्मालाई कसरी मेरो हाङमा बनाएर यो घरमा सधैँको लागि राख्न सकिन्छ त ?

साकुमा : (सोच्दै) अँ, यदि तिमीले त्यो नुमाहाङ्मालाई सधैँको लागि तिम्रो हाङमा बनाएर यो घरमा तिमीसँगै राख्छौ भने भोलि तिमीले सधैँको दिनमाझैँ सिकार खेल्नु गएजस्तो गर, तर सिकार खेल्नु चाहिँ नजाऊ । बरु मान्द्रोमा बेरिएर घरको एउटा कुनामा लुकेर बस । मचाहिँ कोठेबारीमा गएर तरकारी गोडेजस्तो गर्छु । त्यही बेला सरङबाट लोहोरा भुइँमा झरेर नुमाहाङ्मा भएर घरधन्दा गर्दै खाना पकाउनु थाल्छ । त्यही बेला तिमीले पछाडिबाट नुमाहाङ्माको कम्मरमा समाउनू । म आएर तिमीहरूको विवाह गरिदिन्छु । अनि त्यस दिनदेखि त्यो नुमाहाङ्मा सधैँको लागि तिम्रो हुनेछ ।

हेत्छाकुप्पा : (खुसी हुँदै) हुन्छ साकुमा । त्यसो भए म तपाईंले भनेझैँ भोलि मान्द्रोमा बेरिएर घरको कुनामा लुक्छु । तपाईंचाहिँ कोठेबारीतिर जानुहोस् ल ।

साकुमा : लौ, लौ । म पनि भोलि बिहानै जान्छु । (साकेलाको धुन बज्छ । साकेला सिली टिप्दै मानिसहरू केही सामग्रीहरू लिएर बिस्तारै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । प्रकाश बिस्तारै रङ्गमञ्चमा विलय हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

# आठौँ दृश्य

स्थान : हेत्छाकुप्पाको घर
समय : दिउँसो
पात्रहरू : हेत्छाकुप्पा, रिनाखा र साकुमा
घटना : हेत्छाकुप्पा र रिनाखाको विवाह हुन्छ ।

(साकेलाको धुन बजिरहेको हुन्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको काखमा तुवाचुङ छ । यसमा सातौँकै सबै दृश्यहरू छन् । रिनाखाले सुप्तुलुङमा खाना पकाइरहेकी छिन् । पछाडिबाट बिस्तारै हेत्छाकुप्पा आएर रिनाखाको कम्मरमा समाउँछ । दुवै जनाको वेशभूषा, गहना र सामग्रीहरू दृश्य सातौँकै निरन्तरता छ ।)

रिनाखा : (आत्तिँदै) आई...ऽऽऽ... (फुत्किनु खोज्दै) छोड्नुहोस् मलाई । छोड्नुहोस् । छोड्नुहोस् भनेको । तपाईं को हो मलाई समाउने ?

हेत्छाकुप्पा : (रिनाखालाई छोडिदिएर) म हेत्छाकुप्पा, यो घरको घरमुली ।

रिनाखा : (डरले काम्दै) म...म... मलाई थाहा छ ।

हेत्छाकुप्पा : (एकोहोरो मायाले हेर्दै) तिमी को हौ ? किन सधैँ यसरी हामी नभएको बेलामा हाम्रो घरमा आएर खाना पकाएको ?

रिनाखा : (डरले काम्दै) म...म वाहाङ[1]को छोरी । मेरो नाम रिनाखा हो । तपाईं सधैँ भोकभोकै हुनुभएको देखेर तपाईंप्रति माया लाग्यो । त्यसैले तपाईंको लागि त्यो

---

१. पानीको नाग हाङपा ।

खाना मैले पकाएर राखेको हुँ । (साकुमा खोक्दै प्रवेश गर्छिन्। दुवै जना सजग हुन्छन् । साकुमाको वेशभूषा, गहना र सामग्रीहरू दृश्य सातौँकै निरन्तरता छ ।)

साकुमा : (खोक्दै) के गर्दै छौ हेत्छाकुप्पा ?

हेत्छाकुप्पा : (अप्ठ्यारो मान्दै) केही पनि हैन, साकुमा । (रिनाखालाई हेर्दै) रिनाखा, आबो हामीलाई साकुमाले पनि देखिसक्नुभयो । (अप्ठ्यारो मान्दै) वास्तवमा रिनाखा, म तिमीसँग विवाह गरेर घरजम गर्न चाहन्छु । बाँकी जीवन तिमीसँगै बिताउनु चाहन्छु । यसमा तिम्रो विचार के छ ?

रिनाखा : (आफैँलाई हेरेर रुँदै) हेत्छाकुप्पा, तपाईंले मलाई छुनु हुँदैन थियो, तर छुइहाल्नु भयो । मेरो कम्मरमा समाएर मलाई बिटुलो पार्नुभयो । आबो म फेरि लोहोरा हुनु सक्दिनँ । मैले पहिलाजस्तो मिठो खानेकुरा पनि मेरो माइतबाट ल्याइदिनु सक्दिनँ । फेरि तपाईंले मलाई जालमा निकाल्दै फाल्दै गर्नुभयो । त्यसै मेरो जिउ पनि थिलथिल्ती भएको छ । सहनै नसक्ने गरी मेरो जिउ दुखिरहेको छ । यस्तो अवस्थामा म मेरो माइत कसरी जाऊँ ? म कसरी जाऊँ ? (रुँदै) मैले तपाईंको के बिगारेको थिएँ र तपाईंले मलाई बिटुलो पार्नुभयो ? किन मलाई छोएर बिटुलो पार्नुभयो ? किन ? किन ? किन ?

हेत्छाकुप्पा : (माया गर्दै) रिनाखा, मैले तिमीलाई छुनु हुँदैन भन्ने कुरा मलाई थाहै भएन । त्यसको लागि म माफी चाहन्छु । (प्रसङ्ग बदल्दै) रिनाखा, जे नहुनु थियो, त्यो भयो । त्यस कुरामा चित्त नदुखाऊ । बरु हामी विवाह गरेर सुखले घरजम गरेर बसौँ, हुँदैन ?

रिनाखा : (शान्ता भएर हेत्छाकुप्पालाई हेर्दै) आबो, तपाईं त्यसै भन्नुहुन्छ भने ठीकै छ । हामी विवाह गरौँला । तर, यहाँ मेरो मामा-पापा कोही पनि हुनुहुन्न । मामा-मापा नै नभईकन म तपाईंसँग कसरी विवाह गरौँ ?

हेत्छाकुप्पा : (सम्झाउँदै) रिनाखा, तिम्रो कुराको म उच्च सम्मान गर्छु । तर, अझै मलाई हेर त, म ता झन् टुहुरा हुँ । मेरो आफन्त भन्ने कोही पनि छैन । म सानो हुँदा नै मेरो मामा-पापा बित्नुभयो । नानाहरूले पनि म भोकले बेहोस भएको बेलामा मऱ्यो भनेर छोडेर जानुभयो । उहाँहरूको अहिलेसम्म अत्तोपत्तो छैन । यहाँ म एक्लो छु । तिम्रो पनि यहाँ मामा-पापा छैन, मेरो पनि छैन । (साकुमातिर देखाउँदै) त्यसैले उहाँ साकुमालाई नै हाम्रो पुर्खा मानेर आशीर्वाद मागौँ न, हुँदैन ?

रिनाखा : (स्वीकारोक्तिमा) हुन्छ, भैहाल्छ नि ।

हेत्छाकुप्पा : (रिनाखासँग साकुमाको छेउमा गएर) साकुमा, आबो यो घरमा तपाईं नै ठुलो मान्छे हुनुहुन्छ । तपाईंलाई नै हामीले हाम्रो पुर्खा मानेर आशीर्वाद माग्दै छौँ । आबो हाम्रो विवाह गरी दिएर हामीलाई आशीर्वाद दिनुहोस् ।

साकुमा : (स्वीकारोक्तिमा) भइहाल्छ नि, आबो तिमीहरूले मलाई नै पुर्खा मानेर आशीर्वाद माग्छौ भने म ता छँदै छु नि ! (सुप्तुलुङतिर देखाउँदै) त्यसो भए लु, अहिले नै तिमीहरू सुप्तुलुङको छेउमा बस । म विवाहको लागि सोलोन्वा[२], वाहिला[३], बत्ती, दही, चामल, काँसेथालमा लिएर आउँछु । (विवाहको सामानहरू ल्याउँछिन् ।)

हेत्छाकुप्पा : (गुन्द्री ल्याएर सुप्तुलुङको छेउमा ओछ्याउँदै) ल रिनाखा, यो सुप्तुलुङको छेउमा बसौँ ।

रिनाखा : (हेत्छाकुप्पाको देब्रेपट्टि बस्दै) हुन्छ ।

साकुमा : (सोलोन्वाले सुप्तुलुङ थोक्दाउँदै)
सोइ...ऽऽऽ...
दिप्पाचोपाचो दिमाचोमाचो ।[४]

---

२. मुन्दुमी अस्त्र चिण्डो, यसको घाँटी सानो लामो र पेट ठुलो हुन्छ ।
३. मुन्दुमी अस्त्र मेरीको पात वा मुरुरे कटुस ।
४. ल है पुर्खाहरू,

रिनाखा : (ढोग्दै) सोइ...ऽऽऽ...दिप्पाचोपाचो दिमाचोमाचो ।

साकुमा : (सोलोन्वाले सुप्तुलुङ थोक्दाउँदै)
सोइ...ऽऽऽ...
दिप्पाचोपाचो दिमाचोमाचो
आइ ना केन छाआ नाम्मितए ताती,
हेन अकु छाचिबो
निमा चोङ्मा मेत्दानुम
हङलङ इत्दानुम
पुसङ इत्दानुम
खावा इत्दानुम
चासुम इत्दानुम
आइदोकोङ अकु छाची
कप्पारुङ-कम्मारुङ लिसा कानेई ।
(सुप्तुलुङको मुसो लगाइदिँदै) हेन खन्नाची कप्पारुङ-कम्मारुङ तलिसाची । निलो थङयाङसो युङाची ।[५]

हेत्छाकुप्पा : (आशीष थाप्दै) आलाङ्ने दिमो ।[६]

रिनाखा : (आशीष थाप्दै) आलाङ्ने दिमो । (साकेलाको धुनमा ढोल-झ्याम्टाको आवाज गुन्जिन्छ । सबै जनाले सिली टिप्छन् । सिली टिप्दै मानिसहरू केही सामग्रीहरू लिएर बिस्तारै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । बिस्तारै प्रकाश विलयन भएर स्थिर हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

---

५. लहै पुर्खाहरू,
आज तपाईंहरूको छोरा-नातिले
बुहारी पो ल्यायो
आबो यिनीहरूलाई आशीर्वाद दिनुहोस्
यिनीहरूको सुव्यफाव्य बनाइदिनुहोस्
यिनीहरूलाई धन-सम्पत्ति दिनुहोस्
यिनीहरूलाई आयु दिनुहोस्
आजदेखि यिनीहरू बुढाबुढी भयो है
आजदेखि तिमीहरू बुढाबुढी भयौ है
राम्ररी जीवन बिताउनू ।

६. धन्यवाद हजुरआमा ।

# नवौं दृश्य

स्थान : हेत्छाकुप्पाको घर
समय : बेलुका
पात्रहरू : हेत्छाकुप्पा, रिनाखा र साकुमा
घटना : सबै जनाले हाँसखेल गर्दै खाना खान्छन् ।

(चराचुरुङ्गीहरू चिरबिराइरहेका छन् । प्रकाश बिस्तारै प्रकट रङ्गमञ्चमा हुन्छ । हिमालयको काखमा तुवाचुङ छ । यसमा आठौँकै सबै दृश्यहरू निरन्तरता छ । रिनाखाले सुप्तुलुङ[1]मा खाना पकाइरहेकी छिन् । उनको वेशभूषा, गहना र सामग्रीहरू दृश्य आठौँकै निरन्तरता छ ।)

रिनाखा : (मनोवादमा) अँ, हेत्छाकुप्पासँग विवाह गरेर आएको पनि धेरै समय भयो । तर पापा-मामाले अहिलेसम्म बोलाउनुभएको छैन । हेत्छाकुप्पासँग मैले विवाह गरेर बसेको मोङचेम[2]सहित माङपालाई पठाएको थियौँ तर नानी भएपछि मात्रै विवाहको रित लिनुहुने अरे ।

हेत्छाकुप्पा : (प्रवेश गर्दै) रिनाखा, के गर्दै छौँ ?

रिनाखा : खाना बनाउँदै छु पापा । (हेत्छाकुप्पाको वेशभूषा र गहना दृष्य आठौँकै जस्तो छ । उनले हातमा तालित[3] बोकेको छ । काँधमा जाबी[4], कमरमा दापसहितको खुकुरी र चिण्डो भिरेको छ ।)

---

१. खम्बु समुदायको पवित्र तीनचुला ढुङ्गा । यसमा जन्मदेखि मृत्युसम्मको मुन्दुमहरू प्रदर्शन गरिन्छ ।
२. खम्बु समुदायको चेली भगाएपछि भोर्लाको पातमा एक चिण्डो रक्सी माइतीलाई पुऱ्याइदिने रित ।
३. बाँसबाट बनाइएको गुलेली ।
४. सुनाखरीको धागोबाट बुनिएको मुन्दुमी सानो जाबी ।

हेत्छाकुप्पा : (तालित र जाबी राख्दै) अनि तिमीलाई कस्तो छ ?

रिनाखा : मलाई ता ठीकै छ । अनि तपाईं नि ?

हेत्छाकुप्पा : मलाई पनि ठीकै छ । (जाबीबाट मरेको ढुकुर निकाल्दै) यी यता हेर त, आज मैले पासोमा पारेर ढुकुर ल्याएको छु । (सुप्तुलुङको छेउमा गएर) रिनाखा, आगो बालेर पात ल्याऊ है । यो ढुकुरलाई काटकुट पारेर पकाइ खानुपर्छ । आजको तिहुन यै ढुकुरको मासु भयो ।

रिनाखा : हवस् । (सुप्तुलुङमा आगो बालेर पात ल्याएर दिँदै) पापा, तपाईं कति बहुमुखी हुनुहुन्छ, है ?

हेत्छाकुप्पा : (ढुकुर पोल्दै) आच्या, कसरी पो ?

रिनाखा : आबो कसरी भन्नु र ! तपाईं कहिले बल्छी खेल्नुहुन्छ । कहिले जाल हान्नुहुन्छ । कहिले सिकार खेल्नुहुन्छ । कहिले लिसो थाप्नुहुन्छ । कहिले पासो थाप्नुहुन्छ । कहिले तालितले पहराको ढुङ्गा छेडेर पानी निकालेर खानुहुन्छ । कहिले एउटै रुखमा विभिन्न प्रकारको फलफूलहरू फलाएर खानुहुन्छ । कहिले वापामा चढेर संसार हेर्नुहुन्छ । यस्तो धेरै काम गर्नुहुन्छ । फेरि घरव्यवहारमा पनि त्यत्तिकै सिपालु हुनुहुन्छ । अनि ता तपाईं बहुमुखी प्रतिभाशाली हुनुभएन त ?

हेत्छाकुप्पा : (ढुकुरलाई पोलिसकेर पातमा फोर्दै) त्यो ता हो । तर, त्यतिको प्रतिभाशाली ता हुनै पर्‍यो नि ! नत्र अरूले हेपिहाल्छ नि !

रिनाखा : त्यो ता हो । (ढुकुरको गाँड फुटाएर हेर्दै) पापा, यो ढुकुरको गाँडमा ता अन्नको गेडागुडी पो छ त ?

हेत्छाकुप्पा : (उत्साहित भएर हेर्दै) हँ ! अन्नको गेडागुडी छ ? (ढुकुरको गाँड हेर्दै) खै त, म पनि त्यो अन्न हेर्छु ।

रिनाखा : (चोइटाले गाँडको अन्न देखाइदिँदै) यी हेर्नुहोस् त पापा । यो ढुकुरको गाँडमा भएको अन्नको गेडागुडी ।

हेत्छाकुप्पा : (गाँडको अन्न हेर्दै) ए...ऽऽऽ...हो ता रैछ । यो ढुकुरले पनि अन्न खाँदो रैछ है ? (सुप्तुलुङतिर आउँदै) आ,

जेसुकै होस् । यो गाँडलाई घुरेनतिर फ्याँकिदिऊँ । यसले हाम्रो घरलाई फोहोर मात्रै पार्दै छ ।

रिनाखा : (स्वीकारोक्तिमा) हुन्छ, पापा । (हेत्छाकुप्पाले ढुकुरको गाँडलाई घुरेनतिर फ्याँक्छ । अचानो लिएर ढुकुरको छेउमा राख्छ ।)

हेत्छाकुप्पा : (अचानोमाथि मासु काट्दै) आबो यो मासु पकाएर खानुपर्छ । यो मासु निकै मिठो होला जस्तो छ ।

रिनाखा : हो र पापा ?

हेत्छाकुप्पा : (मासु काट्दै) हो नि, ढुकुरको मासुमा बोसैबोसो पनि छ । बोसैबोसो भएको मासु चखिलो पनि हुन्छ । (हेत्छाकुप्पाले मासुलाई काटकुट पारेर पकाउँछ । रिनाखाले बान्ता गर्छिन् । डौडिएर रिनाखालाई समाउँदै) रिनाखाऽऽऽ... तिमीलाई के भयो ? (साकुमाको प्रवेश भई छक्क परेर हेर्छिन् । उनीको वेशभूषा, गहना र सामग्रीहरू दृश्य आठौँकै निरन्तरता छ ।)

रिनाखा : (बान्ता गरिसकेर) खै पापा, अचेल मलाई के भइरहेको छ को नि ? अस्तिदेखि भुँडी दुख्छ । रिङ्गटा लाग्छ । झर्को लाग्छ । रिस उठ्छ । जिउ गरुङ हुन्छ । अल्छी लाग्छ । अमन हुन्छ । बान्ता हुनु खोज्छ । अस्तीदेखि महिनावारी पनि रोकिएको छ ।

साकुमा : (रिनाखालाई समाल्दै) रिनाखा, म पनि तिमीजस्तै महिला हुँ । त्यसैले तिम्रो कुरा म राम्ररी बुझ्छु । तर रिनाखा, तिमीले भनेजस्तो सङ्केत शरीरमा देखापर्‍यो भने ता गर्भवती पो भइन्छ त ! कतै तिमी पनि गर्भवती ता भएनौ ? (ज्याङ्कुमामा सुताउँदै) रिनाखा, यो ज्याङ्कुमामा सुत्दै गर है । (हेत्छाकुप्पालाई हेर्दै) हेत्छाकुप्पा ।

हेत्छाकुप्पा : जेऊ साकुमा ।

साकुमा : (सम्झाउँदै) रिनाखा गर्भवती भएको जस्तो छ । आबो, उसलाई बल काम गर्न नदिनू । दु:ख पनि नदिनू है ।

हेत्छाकुप्पा : हवस्, साकुमा । रिनाखालाई म राम्रो हेरविचार गरेर राख्छु । (आकाशतिर ढोग्दै) ओ...ऽऽऽ...माङ । हजुरको आशीर्वादले गर्दा हामीलाई सन्तान लाभ हुने भयो । आबो यो पृथ्वीमा हाम्रो सन्तानले पूरै ढाक्नेछ ।

साकुमा : हेत्छाकुप्पा, ल उठ । आबो खाना खानुपर्छ । रिनाखा भोकाइसक्यो । (भान्सातिर जाँदै) हेत्छाकुप्पा, थाल-बटुको ल्याऊ त । म सबैलाई खाना पस्किन्छु ।

हेत्छाकुप्पा : (उठ्दै) हवस् । (थाल-बटुको ल्याएर दिँदै) यी साकुमा थाल-बटुको ।

साकुमा : (खाना पस्केर दिँदै) हेत्छाकुप्पा, यो खाना पहिला रिनाखालाई देऊ त । रिनाखालाई भोक लागिसक्यो होला ।

हेत्छाकुप्पा : हवस् । (रिनाखालाई खाना दिँदै) रिनाखा, यी खाना ।

रिनाखा : (खाना समाउँदै) आलाङ्ने पापा ।

साकुमा : (खाना दिँदै) हेत्छाकुप्पा, यी तिमीलाई पनि खाना ।

हेत्छाकुप्पा : (खाना समाउँदै) आलाङ्ने । (साकुमालाई हेर्दै) साकुमा तपाईंलाई पनि भोक लागिसक्यो होला । तपाईं पनि खाना खानुहोस् ।

साकुमा : (खाना पस्काएर खाँदै) हुन्छ । आबो म पनि खाना खान्छु ।

हेत्छाकुप्पा : (खाना खाँदै) लौ, लौ । आबो सबै जनाले सँगै खाना खाऊँ । (सबैले खाना खान्छन् । साकेलाको धुनमा ढोल-झ्याम्टाको आवाज गुन्जिन्छ । सिली टिप्दै मानिसहरू केही सामग्रीहरू लिएर बिस्तारै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । बिस्तारै प्रकाश विलयन भएर स्थिर हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

# दसौँ दृश्य

स्थान : हेत्छाकुप्पाको घर
समय : बेलुका
पाात्रहरू : हेत्छाकुप्पा, रिनाखा र नानी
घटना : हेत्छाकुप्पाले नयाँ बाली चढाउँछ ।

(तान बुनिरहेको आवाज आउँछ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको काखमा तुवाचुङ छ । यसमा नौँ दृश्यकै निरन्तरता छ । घुर्‍यानमा कागुना, कोदो, घौयालगायत विभिन्न प्रकारका अन्नहरू झुप्पै फलेको छ । रिनाखाले तान बुनिरहेकी छिन् । उनीको वेशभूषा, गहना र सामग्रीहरू दृश्य नौँकै निरन्तरता छ । खाँबोको छेउमा करिब तीन वर्षको नानी खेलिरहेको छ । नानीले शरीरमा लोछुम लगाएको छ।)

रिनाखा : (तान बुन्दाबुन्दै रोकिएर नानीतिर हेर्दै) यो हाम्रो नानी पनि उसको पापाजस्तो कति ज्ञानी छ । अघिदेखि आफैँ आँगनमा खेलिरहेको छ । अघाएपछि उसलाई कोही पनि चाहिँदैन । आफैँ खेल्छ । आज ता उसको जन्म दिन पनि हो । तर, उसलाई केहीको पनि चिन्ता छैन । हेर्दाहेर्दै यो नानी पनि कति ठुलो भइसक्यो ।

नानी : (रिनाखाको काखमा बस्दै) आमा ! भोक लाग्यो ।

रिनाखा : (दुध खुवाउँदै) नानी, अहिले बुबु खाँदै गर है । भरै पापा आउनुभएपछि माम खानुपर्छ ।

नानी : (दङ्ग्याउँदै) नाई आमा, म ता बुबु नखाने । माम नै खाने ।

रिनाखा : किन नानी ? (दुध खुवाउँदै) अहिले बुबु खाँदै गर न ।

नानी : नाईं, तपाईंको बुबुबाट बुबु नै आउँदैन ।

रिनाखा : (फकाउँदै) नानी, अहिले हाम्रो घरमा खानेकुरा केही पनि छैन । तिम्रो पापा हिजै खाने कुरा खोज्नु जानुभएको छ । तर, अहिलेसम्म आइपुग्नुभएको छैन । आबो तिम्रो पापाले भरै खानेकुरा ल्याएर आउनुभएपछि अघाउन्जेल माम खानुपर्छ । अहिले चाहिँ यही बुबु नै खाँदै गर है । (हेत्छाकुप्पाको प्रवेश हुन्छ । उनीको वेशभूषा, गहना र सामग्रीहरू दृश्य आठकै निरन्तरता छ । हेत्छाकुप्पालाई हेर्दै) पापा, तपाईं आइपुग्नुभयो ?

हेत्छाकुप्पा : (थकित भएर बस्दै) अँ, आउनु ता आएँ । तर जहाँ त्यहाँ खानेकुरा खोज्दा पनि खानेकुरा कहीँ पनि भेटिनँ । खानेकुरा नलिई रित्तै पो आएँ ।

नानी : (रिनाखालाई हेर्दै) आमा, तपाईंले मलाई पापा आउनुभएपछि अघाउन्जेल माम खाने भन्नुभएको थियो हैन ? लु, आबो ता पापा आउनुभयो । माम खाउँ न है । मलाई साह्रै भोक लाग्यो ।

रिनाखा : (नानीलाई अँगालो मार्दै भक्कानिएर रुँदै) नानी, मैले तिमीलाई पापा आउनुभएपछि अघाउन्जेल माम खानु दिउँला भनेकै हो । तर, आज पनि पापाले खानेकुरा केही भेट्नु भएनछ । पापा रित्तै आउनुभयो । हाम्रो घरमा पनि खानेकुरा केही छैन । (भक्कानिएर रुँदै) आबो, म आफैं पनि धेरै दिनसम्म भोकभोकै छु । भोकभोकै भएकोले गर्दा मेरो दुध पनि आउनु छोड्यो । आबो, यस्तो अवस्थामा मैले तिमीलाई खानेकुरा के दिउँ त, नानी ?

नानी : (रिनाखाको आँसु पुछिदिँदै) आमा, मैले तपाईंलाई खानेकुरा मागेँ भनेर तपाईंको चित्त दुख्यो हो ? (फकाउँदै) तर, आमा मलाई साह्रै भोक लाग्यो र पो मैले तपाईंलाई खानेकुरा मागेको त । तर, तपाईं ता

त्यसै रुनु पो हुँदोरैछ । (रिनाखालाई उठाउँदै) उठ्नुहोस् आमा, उठ्नुहोस् । आबो नरुनुहोस् । अबदेखि म तपाईंलाई कहिल्यै पनि खानेकुरा माग्दिनँ है ?

रिनाखा : (आँसु पुछ्दै) नानी, मैले चित्त दुखाएको होइन । तर, के गर्नु नानी ? तितोसत्य यस्तै छ । म आफैं पनि धेरै दिनको भोकले गर्दा धेरै कमजोरी भइसकेको छु । (हेत्छाकुप्पातिर हेर्दै) आबो के गर्ने पापा, मैले ता तपाईंलाई त्यो ढुकुरको गाँड फालेको ठाउँमा बिउ उम्रिएर फलेको अन्नहरूलाई नै ल्याउनुहोस् न, खाऊँ । केही समयसम्म भए पनि छाक टर्छ भनेकै थिएँ । तर, तपाईंले ता त्यो फलमा विष छ, खानु हुँदैन भन्नुभयो । तर, ढुकुरले त्यो अन्न खाँदा ता ढुकुर मरेन भने, हामीले पनि त्यो अन्न खाँदा मात्दैन थियौँ । तर, तपाईंले मेरो कुरै सुन्नु भएन । आबो, धेरै दिनसम्म भोकभोकै बस्दाबस्दा मेरो शरीरमा केही पनि छैन । आबो ता मेरो शरीरबाट दुध पनि आउन छोड्यो । आबो, यस्तो अवस्थामा मैले यो नानीलाई खानेकुरा के दिउँ, पापा ? के दिऊँ ? (भक्कानिएर रुँदै) आबो म के गरौँ, पापा ? म के गरौँ ? (हेत्छाकुप्पाले आँसु पुछेर बाहिन्छिन् । रिनाखाले हेत्छाकुप्पा गएतिर हेरिरहन्छिन् ।)

नानी : (हेत्छाकुप्पातिर हेर्दै) आमा, पापा कहाँ जानुभएको ?

रिनाखा : (आँसु पुछ्दै) बाहिर कतै जानुभएको होला नानी ।

नानी : आमा, आज हामीले के खाने ?

रिनाखा : खै नानी, के खाने, के खाने ? पापा पनि नबोली बाहिर जानुभयो । आबो, घरमा पनि खानेकुरा केही छैन । (हातमा अन्न लिएर हेत्छाकुप्पाको प्रवेश हुन्छ ।)

हेत्छाकुप्पा : (रिनाखालाई हेर्दै) रिनाखा, मैले ता यो अन्न विषालु होला भनेर खानु हुँदैन भनेको थिएँ । तर, त्यो अन्न खाएको ढुकुरलाई हामीले मारेर खाँदा पनि हामीलाई

केही पनि नभएको हुँदा यो अन्न खानुहुन्छ भन्ने कुरा ता मैले वास्तै पो गरेको थिइनँ । मेरो ठुलो भूल भयो । त्यस कुराले तिमीलाई धेरै दुःख भयो, तर चित्त नदुखाऊ है, रिनाखा । अबदेखि तिमीले जे भन्छौ, त्यही मान्छु ।

रिनाखा : (हेत्छाकुप्पालाई हेर्दै) पापा, जे नहुनु थियो, त्यो भइसक्यो । आबो त्यसमा चित्त दुखाएर नै पो के पाइन्छ र ? (प्रसङ्ग बदल्दै) बरु पापा, छिटो खाना पकाएर नानीलाई खुवाउनुपर्छ । अस्तिदेखि नानीले केही पनि खान पाएको छैन । नानी धेरै भोकाइसक्यो । नानी धेरै भोकायो भने, फेरि तपाईंजस्तै बेहोस हुन्छ ।

हेत्छाकुप्पा : (बुछामा खाना पकाउँदै) हुन्छ रिनाखा, म छिट्टै खाना पकाउँछु ।

नानी : (भाततिर देखाउँदै) आमा, आबो यो माम खाने हो ?

रिनाखा : (काखमा खेलाउँदै) हो नानी, आबो यो माम पाकेपछि खानुपर्छ है ।

नानी : (रमाउँदै उठेर नाच्दै) आबो माम खाने... आबो माम खाने... आबो माम खाने...

हेत्छाकुप्पा : (सम्झाउँदै) नानी, यसरी साह्रै रमाउँदै नाच्नु ता हुँदैन । सानोमा म पनि धेरै दिनपछि माम खान पाउने भएँ भनेर रमाउँदै नाच्दा अगुल्टोमा अल्झिएर खाना घोप्टियो । म लडेर यहीँ बेहोस भएँ । तर, मलाई कति होसमा ल्याउनु खोज्दा पनि म होसमा नआएपछि मऱ्यो भनेर मेरो नानाहरूले मलाई छोडेर जानुभएछ । त्यही दिनदेखि अहिलेसम्म नानाहरूसँग मेरो भेट भएको छैन । उहाँहरूको बारेमा खबर पनि केही थाहा छैन ।

रिनाखा : (सम्झाउँदै) लु भयो पापा । आबो फेरि विगतको कुरालाई नसम्झिनुहोस् । सधैँ विगतको कुरालाई सम्झिरहनु मात्र थालियो भने, हामी अझै पछाडि

पर्छौं । आबो, हामीले विगतको कुरालाई भुलेर नयाँ काम पो गर्नुपर्छ त । समयअनुसार परिवर्तन हुनुपर्छ ।

हेत्छाकुप्पा : त्यसो भए हामीले नयाँ काम के गर्ने त ?

रिनाखा : आबो पापा, हामी सधैँ यो खोवालुङमा बस्नुभन्दा अर्को नयाँ घर बनाएर बस्नुपर्छ ।

हेत्छाकुप्पा : (खाना पकाउँदै) नयाँ घर ता बनाउने, तर कसरी बनाउने ?

रिनाखा : पापा, त्यसको बारेमा तपाईंले चिन्तै नलिनुहोस् । नयाँ घर कसरी बनाउने भन्ने कुरा म तपाईंलाई बताउँछु ।

हेत्छाकुप्पा : ल ठीक छ । पहिला खाना खाऊँ । बाँकी कुरा पछि गरौँला । (यताउति हेर्दै) अनि रिनाखा, साकुमालाई अघिदेखि नै देख्दिनँ नि ! कहाँ जानुभयो ?

रिनाखा : (थाल ल्याएर खाना खानु बस्दै) खै पापा, साकुमा बिहानै बाहिर जान्छु भनेर हिँड्नुभएको थियो । तर अहिलेसम्म फर्किनुभएको छैन ।

हेत्छाकुप्पा : (खाना पस्काउँदै) ए...ऽऽऽ...त्यसो भए साकुमाको भाग राखिदिएर हाम्रो भागचाहिँ खानुपर्छ ।

रिनाखा : (नानीलाई काखमा लिँदै) ल ल पापा । आबो त्यसै गरौँ । (हेत्छाकुप्पाले खाना पस्काएर सबैलाई दिन्छ । आफू पनि खान्छ । सबै जनाले हाँसखेल गर्दै खाना खान्छन् ।)

हेत्छाकुप्पा : (खाना खाँदै टाउको छाम्दै) हन, आज मलाई के भयो ? अचानक रिङ्गटा पो लागेर आयो ।

रिनाखा : (हेत्छाकुप्पातिर जाँदै) अचानक तपाईंलाई के भयो ?

हेत्छाकुप्पा : (खाना छोडेर सुत्दै) खै के भयो, के ? टाउको पनि दुख्दै छ । वाकवाकी पनि आउँदै छ । यो अन्नले पो मात्यो कि, क्या हो ? (सुत्दै) एकछिन यही सुत्छु है ।

रिनाखा : (हेत्छाकुप्पा सुताउँदै) लौ, लौ ।

हेत्छाकुप्पा : (टाउको छाम्दै) हन साँच्चै, यो अन्न ता खानु हुँदै न थियो कि, क्या हो ? यो अन्न विषालु छ जस्तो ता लाग्दै थियो, तर तिमीले पत्याएनौ । कतै यो अन्न खाने

जति हामी सबै जना मरिन्छ कि, क्या हो ? साँच्चै यो अन्नले मातेर मरियो भने ता, सबै जना एकै छाक पो भइन्छ त । हाम्रो लास उठाउने मान्छे पनि हुँदैन ।

रिनाखा : एकछिन पर्खनुहोस् है त, म यारी[1] हेर्छु । (हात धोएर सुप्तुलुङको छेउमा ध्यान बस्छिन् । रिसियाको तालमा ढोल र थाल बज्न थाल्छ । सुप्तुलुङलाई ढोग्दै)
हेन्खाऽऽऽ...बोब्बीऽऽऽ... मामुनाऽऽऽ...बेनऽऽऽ...
निनामऽऽऽ...बोब्बीऽऽऽ...मामुनाऽऽऽ...बेनऽऽऽ...
छेत्लुङ्ऽऽऽ...माछेऽऽऽ...मामुनाऽऽऽ...बेनऽऽऽ...
साकुलङच्यो ऽऽऽ...दिवालङच्यो ऽऽऽ...
मामावाए ऽऽऽ...चुनिवावो ऽऽऽ...
यारी खाङमा यङमुङाङा ।[2]
(बिस्तारै आँखा खोलेर हेर्दै) पापा, हामीले हाम्रो पुर्खाहरूलाई यो अन्न पहिला चढायौँ त ?

हेत्छाकुप्पा : खै रिनाखा, मैले ता चढाउनै पो बिर्सेछु ।

रिनाखा : पापा, सधैँ हामीले नयाँ अन्नबाली खाँदाखेरि पहिला पुर्खालाई चढाएरमात्र खानुपर्थ्यो । तर, हामीले ता पुर्खाहरूलाई नचढाई नै पो त्यो अन्न खाएछौँ । त्यही भएर पुर्खाहरूले हामीलाई सजय दिनुभयो । अबदेखि पुर्खालाई पहिला यो नयाँ अन्नबाली चढाएपछि मात्रै प्रसादको रूपमा खानुपर्छ ।

हेत्छाकुप्पा : (अलमलिँदै) चढाउनु ता चढाउने । तर कसरी चढाउने ? हामीले ता नयाँ अन्नलाई जुठो पारिसकेको छौँ ।

रिनाखा : (सम्झाउँदै) त्यसो होइन पापा । तपाईंले ल्याउनुभएको सबै अन्नलाई ता, हामीले जुठो पारेको छैनौँ नि ! आबो

---

१. जोखाना, यो मुन्दुमी संस्कारमा अनिवार्य साइत हेरिन्छ ।
२. पृथ्वीको उत्पत्ति हुँदाखेरि
आकाशको उत्पत्ति हुँदाखेरि
दल्छिनढुङ्गाको उत्पत्ति हुँदाखेरि
वज्रढुङ्गाको उत्पत्ति हुँदाखेरि
हे पुर्खाहरू हो !
जोखाना पो हेर्दै छु है ।

जुठो नभएको बाँकी अन्नलाई चाहिँ हामीले पुर्खालाई पहिला चढाएर मात्रै खानुपर्छ ।

हेत्छाकुप्पा : तर...

रिनाखा : (सम्झाउँदै) पापा, त्यसको लागि तपाईंले हातमा अदुवा, सोलोन्वा, खुर्पा, कर्द, तालित[३] र शिरमा दोलो[४] लगाएर सुप्तुलुङको डिलमा बस्नुहोस् । मुन्दुम फलाक्दै यारी काट्नुहोस् । सोलोन्वाले सुप्तुलुङलाई थोक्दाउँदै[५] सृष्टिकालदेखि अहिलेसम्मको पुर्खाहरूलाई बोलाउनुहोस् । त्यो बेलामा तपाईं जोडजोडले काम्नु हुन्छ । काम्दै दौडिएर आँगनमा पुग्नुहुन्छ । आँगनमा यारी हेरेर सोलोन्वाले थोक्दाउँदै खुर्मीले खोतल्नुहोस् । त्यहाँ तपाईंले साकेलुङ[६] भेट्नुहुन्छ । त्यो साकेलुङ त हाम्रो पुर्खाको प्रतीक हो । त्यो साकेलुङलाई सोलोन्वाले थोक्दाउँदै पूजा गर्नुहोस् । त्यही बेला आकाश गडगडाउँछ । पानी पर्छ । बिजुली चम्किन्छ । चट्याङ पर्छ । तैपनि पूजा गर्नु नछोड्नू । म पनि तपाईंलाई सिली टिप्न सघाउँछु । त्यसरी पूजा गर्दा तपाईंले अगाडि-अगाडि सिली टिप्दै सातपल्ट दायाँ-बायाँ सातैपल्ट त्यो साकेलुङलाई ढोग्दै याचाम[७] चढाउनुहोस् । अन्त्यमा, तपाईंको कम्प रोकिन्छ । कम्प रोकिएपछि यो नयाँ अन्न पुर्खालाई चढाएर खानुपर्छ । हामीलाई केही हुँदैन । हामीलाई सुव्यफाव्य हुन्छ । हाम्रो आयु बढ्छ ।

---

३. मुन्दुमी बाँसको गुलेली, यो मुन्दुमी संस्कारमा अनिवार्य हतियार चाहिन्छ ।

४. मुन्दुमी श्रीपेच, फेटा ।

५. शुद्ध पार्दै ।

६. मुन्दुमी देवाताको प्रतीक शिला ।

७. मुन्दुमी डालोमा राखिएको चामल, धान, तिल, तितेपाती, जौ आदि, यो मुन्दुमी संस्कारमा अनिवार्य हतियारको रूपमा चाहिन्छ । यो याचाममा एक माना चामल, एउटा ढ्याके पैसा र एक माना रक्सी हुन्छ । मुन्दुमी संस्कार गरिसकेपछि घरमुलीले आफ्नो गच्छेअनुसार पैसा र एक चिण्डो रक्सीले केन्छारुवाहरूको शिर उठाइदिएर यो याचाम घरमुलीले फिर्ता लान्छ ।

हेत्छाकुप्पा : (स्वीकारोक्तिमा) हुन्छ रिनाखा । म तिमीले भनेको जस्तै गरेर यो नयाँ अन्नबाली पुर्खालाई चढाउँछु । अनि बाँकी अन्नबाली प्रसादको रूपमा खानुपर्छ । अहिले नै पुर्खाहरूलाई पूजा गर्नु थालेँ है त ।

रिनाखा : लौ, लौ । पुर्खाहरूसँग धेरै आशीर्वाद मागेर ल्याउनू ।

हेत्छाकुप्पा : (हातमा अदुवा, सोलोन्वा, खुर्मी र तालित लिएर सुप्तुलुङको डिलमा बसेर मुन्दुम फलाक्दैं)
सोई...ऽऽऽ..
दिप्पाचोपाचो
दिमाचोमाचो
आइ ना केन छाआ
केन छावाआ
चामापा इत्दुमयाङ कानेई
हङलङ इत्दोङ
पुसङ इत्दोङ
निमा चोङमा मेत्दोङ
झाराआ केन साया रेप्दुमयाङकानेई
लौ, दिप्पाचोपाचो
दिमाचोमाचो
हेन्खाए मुवा
निनाम्माए मुआ ।[८]

रिनाखा : (सुप्तुलुङलाई ढोग्दै) निनाम्माए मुआ !
(जोडले काम्दै दौडिएर आँगनमा गएर सोलोन्वाले थोक्दाउँदै मुन्दुम फलाक्दै आँगनमा खोतल्छ ।)

---

८. ल है पुर्खाहरू,
आज तपाईंहरूको छोरा-नातिले
तपाईंहरूलाई खाना खुवाउँदै छौँ है
हामीलाई आशीर्वाद दिनुहोस्
सुव्यफाव्य गरिदिनुहोस्
हामी सबैले तपाईंहरूको
शिर उच्च पारिदिएको छौँ
लहै पुर्खाहरू
धर्तिले पो बनायो
आकाशले पो बनायो ।

हेत्छाकुप्पा : (सुप्तुलुङतिर ढोग्दै)
केन साया चोङने
केन रिखि चोङने
दिप्पाचोपाचो
दिमाचोमाचो
सावा दोत्याङसो
साका दोत्याङसो
हङवा दोत्याङसो
पुसङ दोत्याङसो
केन सेवा मुयाङका कानेई
दिप्पाचोपाचो, दिमाचोमाचो ।[९]
(खोतलेको ठाउँबाट चिल्लो लाम्चोढुङ्गा निस्कन्छ । मुन्दुम फलाक्दै सोलोन्वाले थोक्दाउँछ । ढुङ्गालाई पूजा गरेर रिनाखालाई हेर्दै) रिनाखा, लु आबो हाम्रो पुर्खाहरूलाई घरभित्रै हुलौं ।

रिनाखा : (आशीष थाप्दै) आलाङ्ने पापा । (साकेलाको धुनमा ढोल-झ्याम्टाको आवाज गुन्जिन्छ । सबै जनाले सिली टिप्छन् । सिली टिप्दै मानिसहरू केही सामग्रीहरू लिएर बिस्तारै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । बिस्तारै प्रकाश विलयन भएर स्थिर हुन्छ । सबै आवाजहरू बिस्तारै मधुरो भएर रोकिन्छ ।)

---

९. तपाईंहरूको शिर उच्च रहोस्
ल है पुर्खाहरूहो
धन माग्दै
सम्पत्ति माग्दै
आयु माग्दै
बल माग्दै
शक्ति माग्दै
तपाईंहरूको शिर उच्च पारिदिँदै
तपाईंहरूलाई खाना खुवाउँदै छौ
तपाईंहरूको पूजा गर्दै छौं है, पुर्खाहरूहो ।

# एघारौँ दृश्य

| | | |
|---|---|---|
| स्थान | : | हेत्छाकुप्पाको घर |
| समय | : | बिहान |
| पात्रहरू | : | हेत्छाकुप्पा, रिनाखा, नानी र साकुमा |
| घटना | : | नानीको मृत्युसंस्कार गरिदिन्छन् । |

(बिहानीको भाले बाँस्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको काखमा तुवाचुङ छ । यस दृश्यमा दशौँकै सबै दृश्यहरू छन् । ओछ्यानमा हेत्छाकुप्पा, रिनाखा र नानी सुतिरहेका छन् । उनीहरूको वेशभूषा, गहना र सामग्रीहरू दृश्य दशौँकै निरन्तरता छ । रिनाखा निद्रामै छटपटिन्छिन् ।)

रिनाखा : (आत्तिएर उठ्दै) नानी ऽऽऽ... (आकाश गडगडाउँछ । बिजुली चम्किन्छ । चट्याङ पर्छ ।)

हेत्छाकुप्पा : (आत्तिएर उठ्दै) रिनाखा, रिनाखा । के भयो ? किन आत्तिएको ? (नानी पनि आत्तिएर उठेर रिनाखालाई छक्क परेर हेरिरहन्छ ।)

रिनाखा : (डराउँदै) कस्तो डरलाग्दो सपना देखेर पापा ।

हेत्छाकुप्पा : कस्तो सपना देख्यौँ ? (सबै आवाज बिस्तारै रोकिन्छ ।)

रिनाखा : (डराउँदै) नदीमा नानी डुबेको सपना देखेँ पापा ।

हेत्छाकुप्पा : (पसिना पुछिदिँदै) नडराऊ रिनाखा । सबै ठिक हुन्छ ।

रिनाखा : (डराउँदै) अस्तिदेखि पानीमा नानी डुबेको सपना देख्छु । आज पनि त्यो सपना दोहोरियो । अहिले पनि डर लागिरहेको छ पापा ।

हेत्छाकुप्पा : अहिले पनि नानी पानीभित्र डुबेको छ ?

रिनाखा : (नानीलाई छाम्दै) अहिले त डुबेको छैन, मसँगै छ ।

तर सपनामा छाँगाबाट खसेर नदीको घाँगीभित्र डुबेको सपना देखेँ । अहिले पनि मुटु कामरहेको छ ।

हेत्छाकुप्पा : रिनाखा, सपना सपनै हो, बिपना होइन । सपनामा देखेको कुरामा बिपनामा हुँदैन, बिपनामा देखेको कुरा सपनामा हुँदैन । त्यसैले डरलाग्दो सपना देखेर डराउनु पर्दैन । (नानीलाई छाम्दै) हाम्रो नानीलाई केही पनि हुँदैन । (नानीलाई छाम्दै) है नानी ?

नानी : हजुर पापा । (एक छेउमा गएर खेल्छ । रिनाखाले केही भन्नु खोज्छिन् ।)

हेत्छाकुप्पा : (रिनाखातिर हेर्दै) रिनाखा, के पो भन्नु खोज्दै थियौ ?

रिनाखा : पापा, आबो ता हाम्रो नानी पनि ठुलो भइसक्यो । उसलाई बस्ने ठाउँ पनि राम्रै चाहिन्छ । हामीले नयाँ अन्न पनि पुर्खालाई अस्ति नै चढाइसक्यौँ । आबो त्यो अन्नले हामीलाई निकै दिन पुग्छ । तर, हाम्रो बस्ने घर भने, यस्तो अव्यवस्थित छ । पापा, सधैँ हामी यसरी यो खोवालुङमा मात्रै बसेर त, हुँदैन नि !

हेत्छाकुप्पा : (बिस्तारै उठ्दै) त्यसो भए के गर्ने त ?

रिनाखा : नयाँ घर बनाएर बस्नुपर्छ ।

हेत्छाकुप्पा : आबो यत्ति लामो पुस्तासम्म ता, हाम्रो पुर्खाहरू यही खोवालुङमै बसेर जीविका चलाउनुभयो भने आबो हामीले चाहिँ किन पुर्ख्यौली परम्परालाई माया मार्ने ?

रिनाखा : पापा, यो आधुनिक जमनामा सधैँ हामीले पुर्ख्यौली संस्कारलाई पक्रिराखेर हुँदैन ! बरु, हामी पनि समय अनुसार परिवर्तन हुनुपर्छ । राम्रो संस्कारलाई जोगाउँदै जानुपर्छ । नराम्रो संस्कारलाई बिर्सिंदै जानुपर्छ । सधैँ मै मात्रै राम्रो, मेरै मात्रै ठिक, मै मात्रै ठुलो भनेर जिद्दी गर्दै बस्नु हुँदैन । आबो हामीले पनि नयाँ घर बनाएर सभ्य तरिकाले बस्नुपर्छ । फेरि हाम्रो नानी पनि ता ठुलो भइसक्यो । नानीकै लागि भए पनि हामीले नयाँ घर बनाउनै पर्छ ।

हेत्छाकुप्पा : ल, ठीकै छ । आबो राम्रो कुराको संरक्षण गर्दै नयाँ घर

बनाउने हो भने, बनाऊ । तर, नयाँ घरचाहिँ कसरी बनाउने ?

रिनाखा : त्यसको लागि तपाईं चिन्तै नगर्नुहोस् । बरु अहिले नै हाम्रो कामको बाँडफाँड गरौँ । (सोच्दै) अ...अ...पापा, तपाईंले जङ्गलबाट मूलखाँबो काटेर ल्याउनुहोस् । म मूलखाँबो गाड्ने दुलो खन्छु ।

हेत्छाकुप्पा : हुन्छ । (बाहिरिँदै) म अहिले नै जङ्गलतिर गएँ ।

रिनाखा : हुन्छ पापा । तर छिट्टै ल्याउनुहोस् है ।

हेत्छाकुप्पा : (नेपथ्यमा) लौ, लौ । छिट्टै ल्याउँछु । (रिनाखाले साकेला गीत गाउँदै दुलो खन्छिन् । साकुमाको प्रवेश हुन्छ । उनीको वेशभूषा, गहना र सामग्रीहरू दृश्य नौकै निरन्तरता छ ।)

साकुमा : (रिनाखाको छेउमा गएर) रिनाखा, यो के गरेको ?

रिनाखा : (खन्दाखन्दै रोकिएर हेर्दै) हन, नयाँ घर बनाउनुपर्‍यो भनेर मूलखाँबो गाड्नुको लागि दुलो पो खन्दै छु । (प्रसङ्ग बदल्दै) अनि साकुमा, यत्रो दिनसम्म तपाईं कहाँ जानुभएको थियो ?

साकुमा : (प्रसङ्ग बदल्दै) हाम्रो पुर्खालाई भेट्नु गएको थिएँ ।

रिनाखा : ए... !

हेत्छाकुप्पा : (खाँबो लिएर प्रवेश गर्दै) ए, साकुमा पनि आउनुभएछ । लाग्छ है खाँबोले ।

साकुमा : ल, ल । म आफै जोगिन्छु नि ।

हेत्छाकुप्पा : (खाँबो राख्दै) रिनाखा, यो मूलखाँबो हुन्छ ?

रिनाखा : (खाँबो हेर्दै) पापा यो खाँबोमा त, निदालको कापे नै छैन । कापे भएको अर्को खाँबो ल्याउनुहोस् न है ।

हेत्छाकुप्पा : (खाँबो राख्दै) योभन्दा अर्को कस्तो खाँबो ? यो खाँबो ता झन् सुरिलो छ नि ! (प्रकाश बिस्तारै मधुरो भएर पुन: उदय हुन्छ । घुर्‍यानको रुखमा चिभेचरा बसिरहेको छ ।)

रिनाखा : (रुखमा बसेको चिभेचरातिर देखाउँदै) पापा, उ...त्यो चिभेचरालाई देख्नुभयो ?

हेत्छाकुप्पा : (चिभेचरातिर हेर्दै) अहँ देखिनँ, खै कहाँ छ ?

रिनाखा : (चिभेचरातिर देखाउँदै) उ...त्यो घुऱ्यानको रुखमा बसेको छ नि, देख्नुभयो ?

हेत्छाकुप्पा : (चिभेचरातिर हेर्दै) ए...अँ...देखेँ देखेँ ।

रिनाखा : हो, त्यसो भए त्यो चिभेचराको पुच्छरको कापेजस्तो जङ्गलबाट खाँबो काटेर ल्याउनुहोस् है ।

हेत्छाकुप्पा : (जाँदै) हुन्छ, हुन्छ । म अहिले नै गएँ । तिमीले भनेजस्तै खाँबो ल्याएर छिट्टै आउँछु ।

रिनाखा : लौ, लौ, पापा । (दुलो खन्दै) जानुहोस् ।

साकुमा : (दुलो खन्नु सघाउँदै) रिनाखा, यति धेरै गहिरो दुलो ता, खन्नु पर्दैन होला नि !

रिनाखा : (दुलो खन्दै) हैन साकुमा । मूलखाँबो गाड्ने दुलो ता गहिरो नै खन्नुपर्छ । नत्र घर बलियो हुँदैन ।

साकुमा : हो त नि, म पो कस्तो लाटा जस्तो । मूलखाँबो बलियो भए पो, घर बलियो हुन्छ त ।

रिनाखा : (दुलो खन्दै) हो त नि, घर बलियो बनाउनुको लागि जग बलियो चाहिन्छ, जग बलियो बनाउनुको लागि मुलखाँबो गहिरो गाड्नुपर्छ । (बाहिरिँदै) एकछिन है म बलो लिएर आउँछु ।

साकुमा : (दुलो खन्दै) भैहाल्छ नि । म पनि सरा लिएर आउँछु । (बाहिरिँदै) सबैले मिलेरै काम गरौँ न । मिलेर काम गरे जस्तो सुकै काम पनि फेत्ते हुन्छ । (नानी खेल्दाखेल्दै मूलखाँबोको दुलोभित्र लडिभर्छ । तर, कसैले पनि थाहा पाउँदैन ।)

हेत्छाकुप्पा : (खाँबो लिएर प्रवेश गर्दै) रिनाखा, यो खाँबोको कापे चाहिँ चिभेचराको पुच्छरको जस्तो छ । यो खाँबो ता हुन्छ होला नि हैन ?

रिनाखा : (बलो लिएर आउँदै) हो पापा, मैले यस्तै कापे भएको खाँबोमा चाहिँ निदाल अड्काउनु मिल्छ भनेको । (दुलोतिर निदाल ल्याउँदै) यता ल्याउनुहोस्, यता । मूलखाँबो गाड्ने दुलोको छेउतिर ।

हेत्छाकुप्पा : (दुलोतिर खाँबो ल्याउँदै) लौ, लौ, बिस्तारै यो खाँबो तान त । यो खाँबो ता निकै गरुङ छ ।

रिनाखा : (दुलोमा खाँबो लाउनु सघाउँदै) हो त, यो खाँबो ता निकै गरुङ छ । (प्रसङ्ग बदल्दै) पापा, अहिले नै घरको मूलखाँबो गाडेर शुभसाइत गर्नुपर्छ ।

हेत्छाकुप्पा : (दुलोमा खाँबो गाड्दै) लौ, लौ । आबो तिमीले जे भन्छौ, त्यही गरौँला । (साकुमाले सरा लिएर आउँछिन् ।)

रिनाखा : (दुलोमा खाँबो गाड्दै) हैन, यो दुलोमा किन खाँबो पस्दैन । दुलो ता मैले गहिरो नै खनेको थिएँ ।

हेत्छाकुप्पा : (खाँबो गाड्दै) खै त, तिमीले दुलो गहिरो खनेको भए ता खाँबो पसिहाल्थ्यो नि ! आबो दुलोमा खाँबो नै पसेन, कहाँ बाटो हाम्रो नयाँ घरको खाँबो अडिन्छ त ?

साकुमा : (दुलोतिर हेर्दै) के भयो त ? दुलो ता गहिरो नै थियो ।

रिनाखा : त्यै त, साकुमा । मैले मूलखाँबोको दुलो ता गहिरो नै खनेको थिएँ । तर, किन दुलोमा खाँबो पस्दैन ? कतै यो दुलोभित्र अरू केही चिज ता पसेको छैन ?

हेत्छाकुप्पा : (खाँबो गाड्दै) खै, के थाहा ? दुलो खन्ने तपाईंहरू नै हो, तपाईंहरूलाई नै सबै कुरा थाहा होला नि ।

साकुमा : (शङ्का गर्दै) खै, खै हेत्छाकुप्पा । एकछिन यो मूलखाँबो निकाल त । दुलोभित्र केही पसेजस्तो छ ।

हेत्छाकुप्पा : (दुलोबाट खाँबो निकाल्दै) लौ लौ । हेर त । कतै दुलोमा केही पस्यो कि, क्या हो ?

रिनाखा : (दुलोतिर हेर्दै) पापा, यो दुलोभित्र केही चिज पसेको जस्तो छ । मेरोभन्दा तपाईंको हात लामो छ । (हेत्छाकुप्पालाई दुलो छोडिदिँदै) त्यो दुलोको चिज निकाल्नुहोस् त ।

हेत्छाकुप्पा : (खाँबो राखेर दुलोतिर हेर्दै) हो ता रैछ । यो दुलोमा के पसेछ ? खै छोड त । म त्यो दुलोको सामान निकाल्छु ।

रिनाखा : (अलिक पर सर्दै) लु त, पापा ।

हेत्छाकुप्पा : (दुलोबाट नानी झिकेर राखेर) हँ...!

रिनाखा : (आत्तिँदै) हँ...! (नानीलाई अँगालो मार्दै) नानी ! यो के भयो तिमीलाई ? तिमी कसरी दुलोभित्र पस्यौ ?

हेत्छाकुप्पा : (रुँदै) नानी, तिमीले यो के गरेको ?

रिनाखा : (भक्कारिएर रुँदै) नानी, तिमीले हामीलाई एक्लै छोडेर कहाँ गयौ नि...! कहाँ गयौ ?

साकुमा : (सान्त्वना दिँदै) रिनाखा, तिम्रो नानीको भाग्य नै त्यत्ति रैछ । सानैमा बुधाहाङसँग बस्नु पाउने भयो । त्यसैले उसको शरीरमा तिम्रो आँसु झारेर उसको बाटो नछेकी देऊ । उसलाई नरोईकन बिदा गरिदेऊ । उसको बाटो खुला गरिदेऊ । (सम्झाउँदै) रिनाखा, हेत्छाकुप्पा, आबो यसरी रोएर तिम्रो नानीको बाटो नछेकिदेऊ । बरु उसको आत्माको शान्तिको कामना गरिदिऊँ । ऊ फेरि अर्को जन्म लिएर तिमीहरूकै कोखमा जन्मनेछ । चित्त नदुखाऊ । बरु, मुन्दुम फलाक्दै नानीको अन्त्येष्टि ओडारमा लगेर गरिदिऊँ ।

हेत्छाकुप्पा : (मजेत्रोले नानीलाई छोपिदिँदै) नानी तिम्रो भाग्यमा यति नै रैछ । चित्त नदुखाईकन बुङकुरा[१]मा बस है ।

रिनाखा : (रुँदै) नानी, तिम्रो भाग्यमा नै त्यति लेखेको रैछ, चित्त नदुखाऊ । तिम्रो आत्माले शान्ति पाओस् । बरु अर्को जन्म लिएर छिट्टै आऊ । हामीले माङसँग तिम्रो आयु मागिदिन्छौँ । (रिनाखाले नानीलाई अँगालो मार्दै भक्कानिएर रुन्छिन् । दु:खदको धुन बज्न थाल्छ । मानिसहरू केही सामग्रीहरू लिएर बिस्तारै आउँछन् । पछाडिको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लिएर जान्छन् । प्रकाश बिस्तारै विलय भएर नानीमा स्थिर हुन्छ । सबै आवाजहरू बिस्तारै रोकिन्छ ।)

---

१. मुन्दुमअनुसार बुधाहाङको सुनैसुनको दरबार । यस दरबारमा सहज मृत्यु भएका मृतात्माहरूलाई मुन्दुमको माध्ममबाट लगेर राखिन्छ ।

# बाह्रौँ दृश्य

स्थान : हेत्छाकुप्पाको घर
समय : बेलुका
पात्रहरू : हेत्छाकुप्पा, रिनाखा, तायामा, खियामा, चक्का, छन्ना, किप्पा, वापा र गाउँलेहरू ।
घटना : चक्काले हेत्छाकुप्पाको रिनाखासँग विवाह गरिदिन्छ ।

(पीडाको धुन बजिरहेको हुन्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको काखमा तुवाचुङ छ । तुवाचुङमुनि योङवामा बगिरहेको छ । तुवाचुङको घनाजङ्गलमा ओडारहरू छन् । त्यो जङ्गलमा ओडारहरू छन् । ओडारहरूको वरिपरि वाहिबुङ[१], बाँसघारी, भोर्ला, केरा घारीहरू छन् । ओडारभित्रको भित्तामा ढोल, झ्याम्टा, सिलिमी[२], पोमी[३] र तालित[४] झुन्डिएका छन् । एक कुनामा बाँसको लिङ्गो गाडिएको छ । त्यो लिङ्गोको टुप्पोमा सेतो ध्वजा छ । त्यो लिङ्गोको फेदमा भोर्लाको पातमाथि साकेलुङ[५], सोलोन्वा[६], अदुवा र खुर्मी राखिएको छ । त्यो ओडारको एक छेउमा सुप्तुलुङ[७] छ । त्यो सुप्तुलुङबाट धुवाँ आइरहेको छ । यसको छेउमा तान,

१. मुन्दुमी रुख ।
२. मुन्दुमी सिलिमी ।
३. मुन्दुमी चौरीको पुच्छर ।
४. बाँसको भाटाबाट बनाइएको मुन्दुमी गुलेली ।
५. साकेला शिला । यसलाई उभौली र उधौलीमा धुमधामसहित पूजा गरिन्छ ।
६. चिण्डोभित्र पवित्र पानी, तीतेपाती, मर्चा मिसाइएको मुन्दुमी पानी ।
७. मुन्दुमी तीनचुलाढुङ्गा । यस सुप्तुलुङमा खम्बूहरूको जन्मदेखि मृत्युसम्मको मुन्दुमहरू प्रदर्शन गरिन्छ ।

चर्खा, कपास, धागो र कपडा छ । रिनाखा सुप्तुलुङको छेउमा झोक्रिएर बसिरहेकी छिन् । उनको वेशभूषा, गहना र सामग्रीहरू दृश्य एघारौँकै निरन्तरता छ । लामो यात्राको तालमा साकेलाको ढोल-झ्याम्टा बिस्तारै गुन्जिन्छ ।)

साकेला धुन : ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक
ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ ढ्याङ...ऽऽऽ कुक,
ढ्याङ कुक..., ढ्याङ कुक
(केही क्षणपछि वापामाथि चढेर हेत्छाकुप्पाको प्रवेश हुन्छ । उनीको वेशभूषा, गहना र सामग्रीहरू दृश्य एघारौँकै जस्तो छ ।)

हेत्छाकुप्पा : (रिनाखालाई उठाउँदै) रिनाखा, उठ । सधैँ यसरी नानीको शोकमा डुबेर बस्नु ता भएन नि !

रिनाखा : (आँसु पुछ्दै) पापा, तपाईं कति सजिलै भन्नुहुन्छ है, नानीको शोकमा डुबेर नबस भनेर ? तर, मेरो नानीलाई म कसरी बिर्सौं, पापा ? कसरी ? कसरी ?

हेत्छाकुप्पा : (सम्झाउँदै) रिनाखा, हाम्रो नानीको लेखान्तमा त्यति नै लेखेको रैछ । लेखान्तले लेखेको मेटेर मेटिँदैन । सधैँ नानीको शोकमा डुबेर बस्दा तिम्रो जिउ नै कमजोरी भइसक्यो । जिउ नै नरहे मायाको के काम ?

रिनाखा : (आक्रोशमा रुँदै) पापा, एउटा आमालाई आफ्नो मुटुको टुक्राजस्तो नानीको कति माया लाग्छ भन्ने कुरा तपाईंलाई के थाहा ? अनि एउटा आमाले आफ्नो कोखभित्र दस महिना बोकेर जन्म दिएर दुधको धारा खुवाएर हुर्काएको नानीको मृत्यु हुँदा त्यो आमाको आत्मा कति रुन्छ भन्ने कुरा तपाईंलाई के थाहा ?

हेत्छाकुप्पा : (सम्झाउँदै) रिनाखा, मैले तिमीलाई त्यसो भन्न खोजेको कहाँ हो र ? (कपाल मिलाई दिँदै) मैले ता तिमीलाई सधैँ यसरी तिम्रो शरीर नै कमजोरी हुने गरी शोकमा डुब्नु हुँदैन पो भनेको हुँ त ।

रिनाखा : (आँसु पुछेर आत्मबल बढाउँदै) लु भयो, आबो यस्तो कुरा छोडिदिनुहोस् । तपाईंले यस्तो कुरा बुझ्नुहुन्न । बरु भन्नुहोस्, चक्का[८]ले अरू के भन्नुभयो ?

हेत्छाकुप्पा : रिनाखा, हाम्रो विवाहमा मावलीलाई निम्तो गरेर मावली रित दिनुपर्थ्यो रहेछ । तर, हामीले ता मावलीहरूको उपस्थितिविना नै हाम्रो विवाह गरेकोले गर्दा मावली रितको दोष लागेर हाम्रो नानीको मृत्यु भएको कुरा चक्काले बताउनुभयो । मावली रितविना नै विवाह गरेर बस्दा ता अझै धेरै मावली दोष लाग्छ अरे ।

रिनाखा : (छटपटिँदै) त्यसो भए आबो के गर्ने त ?

हेत्छाकुप्पा : (सम्झाउँदै) आबो फेरि हाम्रो विवाह गरेर मावली रित बुझाउनुपर्छ अरे । त्यो हाम्रो विवाहमा चक्का-छन्ना[९] आउनु भएर मावली रित लिनुहुन्छ अरे । त्यसको लागि चक्का-छन्ना पनि आजै आउनु हुँदैछ ।

रिनाखा : (हतारिएर उठ्दै) त्यसो भए आजै हाम्रो विवाहको मावली रित पनि चक्का-छन्नाले लिई दिनुहुन्छ त ?

हेत्छाकुप्पा : (हडबडाउँदै) जेऊ, आजै लिनुहुन्छ अरे । त्यही भएर मचाहिँ हाम्रो विवाहको तयारीको लागि अलिक अगाडि नै आएको हुँ । (एकोहोरिएर हेर्दै) रिनाखा, आज चक्का-छन्नाले हाम्रो विवाहमा मावली रित गरिदिनु हुँदै छ । यो महत्त्वपूर्ण दिनमा नानाहरू पनि भएको भए कति साइत हुन्थ्यो होला । तर, अहिलेसम्म पनि हाम्रो नानाहरूको अत्तोपत्तो छैन । आज मलाई नानाहरूको यादले धेरै सताइरहेको छ । यदि हाम्रो विवाहको मावली रितमा हाम्रो नानाहरू पनि आइपुग्नुभए ता हामी कति भाग्यमानी हुन्थ्यौँ होला । हामी पनि कति रमाउँथ्यौँ होला है ?

रिनाखा : (स्वीकारोक्तिमा) त्यो ता हो, तर के गर्नु ? नानाहरूले तपाईंलाई मर्‍यो भनेर छोडेर जानुभएपछि एकपल्ट

---

८. आमाको आफैनै भाई ।

९. माइजू ।

पनि फर्किएर आउनुभएको छैन । बरु किप्पा[१०]लाई हाम्रो नानाहरू खोज्नु पठाऊँ न त । कतै भेटी पो हाल्छ ?

हेत्छाकुप्पा : (स्वीकारोक्तिमा) हुन्छ, हुन्छ । (बाहिरतिर हेर्दै) किप्पा, ए किप्पा ।

किप्पा : (नेपथ्यमा) जेऊ ।

हेत्छाकुप्पा : यहाँ आऊ त ।

किप्पा : (उफ्रिँदै आउँदै) किन, हाङपा ? (किप्पाले किप्पातित[११] लगाएको छ ।)

हेत्छाकुप्पा : (सम्झाउँदै) हेर किप्पा, तिमी ता उफ्रिएर छिटो हिँड्नु सक्छौ । फेरि तिमीलाई यो ठाउँको बारेमा पनि धेरै थाहा छ । त्यसैले तिमीले तायामा र खियामालाई जसरी भए पनि खोजेर ल्याऊ न है ।

किप्पा : (स्वीकारोक्तिमा) हुन्छ, हाङपा । म अहिले नै तायामा र खियामालाई खोजेर ल्याउँछु ।

हेत्छाकुप्पा : (किप्पालाई ढ्याप मार्दै) स्याबास किप्पा, स्याबास । ल किप्पा । मन बलियो पारेर अहिले जाऊँ । तिम्रो काम पूरा गरेर आऊ, शुभयात्रा ।

किप्पा : आलाङ्ने हाङपा । (हेत्छाकुप्पा र रिनाखालाई खुट्टामा ढोगेर जान्छ । सबै जनाले किप्पा गएतिर हेरिरहन्छन् । त्यही बेला वापा उडेर आउँछ । वापाले वापातित लगाएको छ ।)

हेत्छाकुप्पा : (वापालाई हेर्दै) वापा, तिमी आइपुग्यौ ?

वापा : (समालिँदै) जेऊ, हाङपा ।

हेत्छाकुप्पा : (वापाको छेउमा जाँदै) वापा, तिमी ता उड्नु पनि सक्छौ । त्यसैले तिमीले चाहिँ उडेर छिमेकीहरूलाई हाम्रो विवाहको मावली रितको लागि निम्तो गर । अनि घरलाई पनि सजाएर रङ्गीचङ्गी बनाऊ, है ।

---

१०. उपियाँ प्रकारको किरा ।

११. उपिँया प्रकारको वस्त्र ।

वापा : (बाहिरिँदै) हवस्, हाङपा ।

रिनाखा : अनि पापा, अरू बाँकी कुरा पनि बताउनुहोस् न ।

हेत्छाकुप्पा : म मावलोमा पुग्दा चक्काको नोकर्नी भएर चक्रङदिमाले काम गरिरहेको थियो ।

रिनाखा : त्यो चक्रङदिमालाई योङवामाले बगाएर मऱ्यो भनेको हैन ?

हेत्छाकुप्पा : भनेको त हो तर बाँचेको रैछ । चक्कालाई बुझ्दा त्यो चक्रङदिमालाई योङवामाले ल्याएको रे । तर, मलाई देख्नेबित्तिकै त्यो चक्रङदिमा डराएर लुक्यो । मलाई मारेर खानु खोज्ने चक्रङदिमा त्यही भएको वास्तविक कुरा चक्कालाई बताएँ । चक्काले चक्रङदिमालाई रुमालमा खाजाको पोका दिनुभएर घरबाट तुरुन्तै निकालिदिँदै 'भोक लाग्यो भने, घनाजङ्गलको बिचमा त्यो खाजा फुकाएर खानू' भन्नुभयो । चक्रङदिमा रुँदैरुँदै गयो । घनाजङ्गलको बिचमा पुगेर भोकको झोँकमा खाजा खानुको लागि त्यो खाजाको पोका फुकायो । तर त्यो खाजाको पोकाबाट जङ्गली जनवारहरू उत्पति भएर चक्रङदिमालाई मारेर खायो । चक्रङदिमाको आलो रगत भुइँमा झऱ्यो । त्यो रगतबाट तुरुन्तै उडुस, झिँगा, भुसुना, किरा आदि-आदि भयो । त्यो दृश्य देखेर मलाई पनि डर लाग्यो । म दौडिएर घर आएँ । (टोपीको पोका देखाउँदै) तर, मलाई चाहिँ चक्काले 'यो पोका पारेको टोपीको खाजा घरमा लगेर बुसुनिमा[१२]सँग फुकाउनू भन्नुभयो । त्यसैले मेरो खाजालाई मैले यही लिएर आएको छु ।

किप्पा : (प्रवेश गर्दै) हाङपा ।

हेत्छाकुप्पा : (टोपी समाएर) फेरि, तिमीलाई के भयो किप्पा ?

किप्पा : (नजिक आउँदै) हाङपा, मैले तायामा र खियामालाई

१२. बुहारी ।

जति खोज्दा पनि भेटिनँ । त्यैपनि विन्ती बिसाउनु आएको हुँ ।

हेत्छाकुप्पा : (शालीन भएर) ल ठीक छ । तिमीले नानाहरूलाई भेटेनौँ भने ठीकै छ, केही छैन । बरु तिमीले नानाहरूलाई खोज्दा धेरै कष्ट पायौ । त्यसको लागि तिमीलाई आलाङ्ने ।

किप्पा : (ढोग्दै) आलाङ्ने हाङपा । (वापा उडेर आउँछ ।)

हेत्छाकुप्पा : वापा, छिमेकीहरूलाई निम्तो पनि गरेर आयौ ?

वापा : जेऊ, हाङपा ।

हेत्छाकुप्पा : (वापातिर हेर्दै) वापा, तिमीलाई अघि नै भनिसकेँ कि, तिमी ता उडेर संसारभरि चहार्नु सक्छौ भनेर । फेरि तिमीलाई यो ठाउँको बारेमा पनि सबै कुरा थाहा छ । त्यसैले तिमीले जसरी भए पनि नानाहरू खोजेर हाम्रो विवाहको साइतमा ल्याइपुऱ्याउन है, किप्पाले भेटेन ।

वापा : (स्वीकारोक्तिमा) हुन्छ, हाङपा। म हजुरले भने जस्तो ता गर्नु सक्दिनँ होला । तैपनि मेरो बलबुताले भ्याएसम्म सक्दो प्रयास गर्छु ।

हेत्छाकुप्पा : (ढ्याप मार्दै) स्याबास वापा । हो, यसरी नै सबैको आत्मबल बलियो हुनुपर्छ । अनि मात्र चिताएको काम पूरा गर्नु सजिलो हुन्छ । तिम्रो यात्रा शुभ रहोस् ।

वापा : आलाङ्ने हाङपा । (हेत्छाकुप्पा र रिनाखालाई खुट्टामा ढोगेर बाहिर जाँदै) अहिले म गएँ । तपाईंहरू पनि राम्ररी बस्नुहोस् है ।

हेत्छाकुप्पा : लौ लौ, वापा । (रिनाखातिर फर्किएर टोपीको खाजा देखाउँदै) रिनाखा, चक्काले यो टोपीमा के दिनुभएको रैछ । आबो यो टोपी फुकाएर हेरौँ है, त ?

रिनाखा : (टोपी फुकाउनु सघाउँदै) हुन्छ पापा । कतै चक्काले हामीलाई सुनैसुनको दरबार नै ता पठाइदिनुभएको छैन ?

हेत्छाकुप्पा : बेर पनि छैन । (टोपी बिस्तारै फुकाउँदै) आबो चक्काको

दरबारमा कति धेरै हिरामोती छ भन्ने कुरा अरूलाई के थाहा ? चक्काको ता सुनैसुनको दरबार छ । (दुवै जनाले मिलेर टोपी फुकाउँछन् । रिसियाको तालमा ढोल-झ्याम्टा जोडले बज्छ । प्रकाश विलय भएर पुनः उदय हुन्छ । अचानक घर सुनैसुनको दरबार हुन्छ । अचम्म हुँदै) आम्म...म...म... सुनैसुनको दरबार ?

रिनाखा : (अचम्म हुँदै) हो त नि ! (यताउति हेर्दै) अचानक यो हाम्रो घर कसरी सुनैसुनको दरबार भयो ?

हेत्छाकुप्पा : (अचम्म भएर यताउति हेर्दै) मैले अघि नै भन्दै थिएँ नि, हाम्रो चक्काको दरबारमा कति धेरै धन सम्पत्ति छ भनेर ! त्यतिखेर तिमीले मलाई जिस्कायौ मात्रै । आबो हामीलाई चक्काले सुनैसुनको दरबार दिनुभएपछि ता मान्छौ होला नि ?

रिनाखा : अँ, आबो मान्नै त पऱ्यो नि ! (बाहिरतिर हेर्दै) उ चक्का र छुन्ना पनि आउनुभयो । (चक्का, छुन्ना र खुन्माको प्रवेश हुन्छ । चक्काले शरीरमा पारुतित[१३] र शिरमा दोलो[१४] लगाएको छ । घाँटीमा कङबुङ[१५] लगाएको छ । दोलोमा मिचिलिबुङ[१६] सिउरिएको छ । काँधमा तालित[१७] भिरेको छ । कम्मरमा खुकुरी भिरेको छ । खुट्टामा लोङखाप[१८] लगाएको छ । छुन्नाले शरीरमा सुम्नितित[१९] लगाएकी छिन् । शिरमा सुनाखरी फूल, नाखमा नाबुकबुङ[२०], कानमा नाबेकबुङ[२१], घाँटीमा

---

१३. कपासमाथि केराको पातबाट बनाइएको पुरुष वस्त्र । यस वस्त्रको कम्मरमाथि सानो र कम्मरमुनि फुकेको हुन्छ । यसको घाँटीमा चिण्डो अङ्कित हुन्छ । यसलाई पारुहाङको वस्त्र मानिन्छ ।

१४. पहेँलो सुनाखरीको धागोबाट बुनिएको मुन्दुमी श्रीपेच । यसको वरिपरि दुम्सी काँडाले सजाइएको हुन्छ । यसको बिचमा मयूरको प्वाँख ठडाइएको हुन्छ । यसलाई पारुहाङको शिर मानिन्छ ।

१५. जनवारको काँडाबाट बनाइएको माला ।

१६. मोहने प्रजातिको मुन्दुमी फूल ।

१७. बाँसबाट बनाइएको मुन्दुमी गुलेली ।

१८. भोर्लाको टाटाबाट बनाइएको चप्पल ।

१९. कपासमाथि भोर्लाको पातबाट बनाइएको स्त्री वस्त्र । यसको कमरमाथि सानो र कमरमुनि फुकेको हुन्छ । यसको घाँटीमा ठराइएको खुर्पाको आकृति अङ्कित हुन्छ । यसलाई सुम्निमाको वस्त्र मानिन्छ ।

२०. सुनाखरीको धागोबाट बनाइएको कुण्डल ।

२१. बेतबाट बनाइएको कुण्डल । यसलाई सुम्निमाको गहना मानिन्छ ।

साक्साबुङ[२२], हातमा छिबुङ[२३] र खुट्टामा लोङबुङ[२४] लगाएकी छिन् । उनले साक्साबुङमा बिनायो र कम्मरमा खुर्पा भिरेकी छिन् । खुन्माले शरीरमा मेख्ली लगाएकी छिन् । ढाडमा तोङवात बोकेकी छिन् । उपस्थित सबैमा साइनाअनुसारको ढोगभेट चल्छ ।)

हेत्छाकुप्पा : (ढोग्दै) सेवा[२५] चक्का ।

चक्का : (ढोग फर्काउँदै) सेवा भान्जा ।

हेत्छाकुप्पा : (छन्नालाई ढोग्दै) सेवा छन्ना ।

छन्ना : (ढोग फर्काउँदै) सेवा भान्जा ।

रिनाखा : (चक्कालाई ढोग्दै) सेवा चक्का ।

चक्का : (ढोग फर्काउँदै) सेवा, बुसुनीमा[२६] ।

रिनाखा : (छन्नालाई ढोग्दै) छन्ना सेवा ।

छन्ना : (ढोग फर्काउँदै) सेवा, सुम्निमाजस्तै हुनु ।

रिनाखा : (छन्नालाई ढोग्दै) आलाङ्ने छन्ना ।

छन्ना : (अराउँदै) खुन्मा, त्यो तोङवात यता ल्याउँ त ।

खुन्मा : हवस्, हाङमा । (तोङवात ल्याएर दिन्छिन् ।)

छन्ना : (तोङवात दिँदै) बुसुनीमा, यो कोसेली ।

रिनाखा : (कोसेली लिदै) ए...कोसेली त पर्दैन थियो नि, छन्ना ।

छन्ना : किन पर्दैन ? छोरीचेली पाहुना लागेपछि कोसेली त परिहाल्छ नि । यो त हातको स्वभाउ पो त ।

हेत्छाकुप्पा : भैगो नि त, छक्का र छन्नाले सम्झेर ल्याउनुभयो, राख न त्यो कोसेली, भित्रै ।

रिनाखा : (भित्र राख्दै) लौ, लौ । राखेँ यो कोसेली घरभित्रै ।

चक्का : (हेत्छाकुप्पालाई हेर्दै) अनि भान्जा, विवाहको सबै तयारी भइसक्यो त ?

हेत्छाकुप्पा : जेऊ चक्का, भइसक्यो । तर, नानाहरू चाहिँ अहिलेसम्म

---

२२. दुम्सीको काँडाबाट बनाइएको माला । यसलाई माङको गहना मानिन्छ ।

२३. सुनाखरीको धागोबाट बनाइएको बाला । यसलाई माङको गहना मानिन्छ ।

२४. सुनाखरीको धागोबाट बनाइएको कल्ली । यसलाई माङको गहना मानिन्छ ।

२५. नमस्कार

२६. बुहारी ।

आइपुग्नुभएको छैन । (वापा उडेर आउँछ ।) अनि वापा, नानाहरू चाहिँ खोइ त ? तिमी मात्रै आयौ ?

वापा : (परतिर हेर्दै) हाङपा, नानाहरू ता लजाएर उ पर नै बस्नुभएको छ । यहाँ कति ल्याउनु खोज्दा पनि नानाहरू परै बस्नुभयो । (वापाले साइनोअनुसार सबैलाई ढोग्छ ।) पहिला नानाहरूले तपाईंलाई भोकले बेहोस भएको बेलामा मर्‍यो भनेर छोडिजानु भएकोले तपाईंदेखि नानाहरूलाई धेरै अप्ठ्यारो लागेको छ ।

हेत्छाकुप्पा : (परतिर जाँदै) खोइ कहाँ हो, मेरो नानाहरू ?

चक्का : (परतिर हेर्दै) भान्जीहरू, ल अप्ठ्यारो नमानीकन यतै आउनुहोस् । म बुढो पनि ता अघि नै आइसकेको छु । तपाईंहरू पनि छिटो आउनुहोस्, भान्जीहरू ।

हेत्छाकुप्पा : (नानाहरूलाई ल्याउँदै) नाना, नजिकै आउनुहोस् । यतै बस्नुहोस् । अप्ठ्यारो मान्नु पर्दैन ।

तायामा : (चक्कालाई ढोग्दै) सेवा चक्का ।

चक्का : (ढोग फर्काउँदै) सेवा, भान्जी ।

खियामा : (चक्कालाई ढोग्दै) सेवा चक्का ।

चक्का : (खियामाको खुट्टा छुँदै) सेवा, भान्जी ।

तायामा : (छन्नालाई ढोग्दै) सेवा छन्ना ।

छन्ना : (तायामाको खुट्टा छुँदै) मोङ्छामा[२७] जस्तै हुनु ।

खियामा : (छन्नालाई ढोग्दै) छन्ना सेवा ।

छन्ना : (खियामाको खुट्टा ढोग्दै) सेवा...मोङ्छामा जस्तै हुनु ।

हेत्छाकुप्पा : (चेलीतिर देखाउँदै) रिनाखा, उहाँहरू मेरो नानाहरू । (तायामातिर देखाउँदै) उहाँ ठुली नाना । उहाँको नाम तायामा । (खियामातिर देखाउँदै) उहाँ कान्छी नाना । उहाँको नाम खियामा । (रिनाखातिर देखाउँदै) अनि नाना, ऊ चाहिँ मेरो खिमहाङमा[२८] ।

रिनाखा : (तायामाको खुट्टामा ढोग्दै) सेवा नाना ।

---

२७. मुन्दुमी देवाता, सम्पत्तिको धनी ।

२८. घरमूली श्रीमती ।

तायामा : (ढोग फर्काउँदै) सेवा बुसुनीमा । खिरिमा[२९]जस्तै हुनू ।
रिनाखा : (खियामाको खुट्टामा ढोग्दै) सेवा नाना ।
खियामा : (ढोग फर्काउँदै) सेवा बुसुनीमा । खिरिमा जस्तै हुनू ।
चक्का : भान्जीहरू ल आउनुहोस्, आउनुहोस् । नलजाईकन यतै आउनुहोस् ।
हेत्छाकुप्पा : (तायामा र खियामालाई ल्याउँदै) नाना, यतै नजिकै आउनुहोस् । अप्ठ्यारो मान्नु पर्दैन । यो हाम्रो मात्रै होइन, तपाईंहरूको पनि घर हो । (तायामा र खियामाले हेत्छाकुप्पालाई अँगालो मारेर रुन्छन् ।)
तायामा : (रुँदै) छेन्वा[३०], अहिलेसम्म तिमी जिउँदै थियौ ? (हेत्छाकुप्पाको अनुहार हेर्दै) छेन्वा, हामीले ता तिमी मऱ्यौ भनेर छोडेर गयौँ । तर, तिमी ता जिउँदै पो रैछौ ।
खियामा : (हेत्छाकुप्पाको अनुहार छाम्दै) हो छेन्वा, हामीले तिमीलाई छोडेर गएपछि तिम्रो मायाको विरहमा हामी कति धेरै छट्पटियौँ ? तिम्रो मायामा कति तड्पियौँ ? तर, हामीले तिमीलाई कहिले पाएनौँ । बल्लाबल्ला, आज भाग्यले पो तिमीलाई भेट्यौँ ।
हेत्छाकुप्पा : (रुँदै नानाहरूको अनुहार छाम्दै) नाना, वास्तवमा म मरेको थिइनँ, भोकले बेहोस मात्रै भएको थिएँ । तर, तपाईंहरूले मलाई मऱ्यो भनेर छोडी जानुभएछ । यत्रो वर्षसम्म तपाईंहरूले मलाई एक्लै छोडेर कहाँ जानुभएको थियो ? अनि यत्रो वर्षसम्म पनि तपाईंहरू किन बेखबर हुनुभएको ? के तपाईंहरूलाई मेरो माया लागेन हो ? (आँसु पुछ्रेर) नाना, तपाईंहरूले एक्लै छोडिगएपछि मलाई सहारा दिने कोही पनि भएन । मैले केही पनि खानु पाइनँ । म धेरै दिनसम्म भोकभोकै भएँ । मलाई सबैले हेप्यो । मैले धेरै दुःख पाएँ । अझै,

---

२९. मुन्दुमी देवता, धनको धनी ।
३०. मुन्दुमी संस्कृतिमा माइतीहरूलाई सम्मान गर्ने उच्चसम्मानार्थी शब्द ।

चक्रङदिमाले मलाई मारेर खानुको लागि धेरै प्रयास गऱ्यो, तर सकेन । बरु चक्रङदिमालाई योङवाले बगाएर लग्यो । अनि मैले रिनाखासँग विवाह गरेर बसेँ । तर, दुर्भाग्य मैले हाम्रो विवाहमा मावली रित नगरेकोले गर्दा मावली रितको दोष लागेर हाम्रो नयाँ घर बनाउँदा मूलखाँबोको दुलोमा लडेर हाम्रो नानीको मृत्यु भयो । (पीडामा रोएर आँसु पुछ्दै) मावली रित नगरेमा अझै मरुमराउ हुन्छ भनेर चक्काबाट थाहा पाएपछि फेरि हाम्रो विवाह गरेर चक्का-छन्नालाई बोलाएर मावली रित गरिरहेको छौँ । तपाईंहरू पनि ठीकै साइतमा आइपुग्नुभयो, जाती नै भयो । तपाईंहरूलाई मुरीमुरी आलाङ्ने ।

तायामा : (आँसु पुछेर) छेन्वा, हामी पनि खुसी ता कहाँ छौ र ? भाग्यले नै ठगेपछि कसको पो के लाग्दो रैछ र ? तिम्रो मृत्यु भयो भन्ने लागेपछि तिम्रो आत्मा शान्तिको लागि खियामासँग मुन्दुम फलाक्दै मुजुर भएर म उत्तरतिर गएँ । धनेश भएर खियामा दक्षिणतिर गयो । तर बाटोमा साम्फेदिवाले खियामालाई मारेर खायो । त्यो कुरा मैले यारीमा थाहा पाएँ । मैले साम्फेदिवालाई फकाएर खियामाको हड्डी देखाइ मागेँ । साम्फेदिवाले रुखको टोड्कामा खियामाको हड्डी देखाइदियो । मैले रुखको टोड्काबाट खियामाको हड्डी ल्याएर चुङ्गेभित्र खियामाको हड्डीलाई तेल, खरानी र पानीमा डुबाएर तान बुनेँ । त्यो तानमा खियामाको अनुहारदेखि शरीरसम्म बुट्टा निकालेँ । अन्त्यमा खियामा पूरै बिउँतियो । त्यसपछि पहिलाझैँ मुन्दुम फलाक्दै म उत्तरतिरै उडेर गएँ । खियामा दक्षिणतिरै उडेर गयो । त्यस दिनदेखि हामी पनि आजसम्म भेट भएको थिएनौँ । हामी पनि आज मात्रै भाग्यले हाम्रो भेट हुँदै छ ।

खियामा : (आँसु पुछ्दै) हो, छेन्वा । हामी पनि आज मात्रै भेट भएको छौं । छेन्वा म ता अझै एकपल्ट मरेर बिउँतिएको हुँ । आज तिम्रो विवाहको शुभसाइतमा सबै जनासँग एकैसाथ भेट हुनुपाएकोमा आफैँलाई भाग्यमानी ठानेको छु ।

हेत्छाकुप्पा : (आँसु पुछ्दै) हामी सबै जनाको दु:खको कहानी ता उस्तै पो रैछ । हामी ता संयोगले पो भेट भएछौं है ?

तायामा : के गर्नु त छेन्वा, आबो हाम्रो भाग्यमै यति नै लेखेको रैछ । भाग्यमा लेखेको मेटेर मेटिँदैन रैछ । भाग्यमा जे लेखेको छ, त्यही भोग्नु पर्दोरहेछ ।

खियामा : हो छेन्वा, त्यही भएर भाग्यले नै हामीलाई टुहुरा बनायो । दु:खैदु:खमा मरेर हामीलाई बाँच्नु बाध्य बनायो ।

हेत्छाकुप्पा : (नानाको आँसु पुछिदिएर) नानाहरू, आबो जे भयो, त्यो भइसक्यो । आबो नरुनुहोस् । हामी ता दिलिबुङ र पातेसुङको सन्तान पो हौ त, यसरी रुनु हुँदैन ।

चक्का : (सबैको आँसु पुछिदिँदै) ल भान्जा-भान्जीहरू । आबो जे नहुनु थियो, त्यो भइसक्यो । यो सबै भाग्यकै खेल हो, लेखान्तले लेखेको मेटेर मेटिँदैन । त्यसैले पहिलाको दु:खलाई भुलेर पहिला भान्जाको विवाहको मावली रितको लागि पुर्खाहरूको सेवा गरौं । बाँकी कुरा पछि गरौंला ।

सबै जना : (एकै स्वरमा) हुन्छ चक्का ।

हेत्छाकुप्पा : (तयारी हुँदै) ल चक्का । आबो हाम्रो विवाहमा मावली रित गरिदिएर हामीलाई आशीर्वाद दिनुहोस् ।

गाउँलेहरू : (प्रवेश गर्दै) सेवा । (पुरुष गाउँलेहरूले शरीरमा लोछुम[३१] र घाँटीमा सिमाला[३२] लगाएका छन् । कम्मरमा खुकुरी

---

३१. कपासमाथि केराको पातबाट बनाइएको पुरुष वस्त्र । यस वस्त्रको कम्मरमाथि सानो र कम्मरमुनि फुकेको हुन्छ । यसको घाँटीमा चिण्डो अङ्कित हुन्छ ।

३२. दुम्सीको काँडाबाट बनाइएको माला ।

भिरेका छन् । महिला गाउँलेहरूले शरीरमा मेख्ली[३३], नाखमा नाबुकबुङ, कानमा नाबेकबुङ, घाँटीमा साक्साबुङ र हातमा छिबुङ लगाएका छन् । उनीले साक्साबुङमा बिनायो र कम्मरमा खुर्पा भिरेका छन् ।)

सबै जना : (नमस्कार फर्काउँदै) सेवा ।

हेत्छाकुप्पा : (स्वागत गर्दै) ल, आउनुहोस्, आउनुहोस् । (बस्नु इसारा गर्दै) बस्नुहोस्, बस्नुहोस् यतै मिलेर । (सबै जना बस्छन् ।)

गाउँलेहरू : भैहाल्छ नि, हेत्छाकुप्पा । (बस्दै) आबो निम्तो गर्नुभयो, हामी पनि एकैचोटि भेला भएर सबै जनासँगै आउँदा अलिक ढिलो पो भयो । माफ पाऊँ है ।

हेत्छाकुप्पा : भैहाल्छ नि, ढिलो भएको छैन । (सबैमा ढोगभेट चल्छ । गाउँलेहरू ल्याएको कोसेली रिनाखालाई दिन्छन् । कोसेलीलाई रिनाखाले घरभित्र हुल्छिन् । घरभित्रबाट रिनाखाले हरियो भोर्लाको पातमा सोलोन्वा, अदुवा, खुर्मी र दियो ल्याएर सुप्तुलुङको अगाडि राख्छिन् ।)

रिनाखा : चक्का, यी विवाहको सामानहरू । यसमा भोर्लाको पातमाथि सोलोन्वा, अछेता, अदुवा र खुर्मी छ ।

चक्का : आलाङ्ने, बुसुनीमा । (अगाडि सर्दै) ल भान्जा, बुसुनीमासँग सुप्तुलुङको छेउमा बस्नुहोस् । म तपाईंहरूको विवाहको मावली रित गरिदिन्छु ।

हेत्छाकुप्पा : (सुप्तुलुङको छेउमा बस्दै) लु आऊ रिनाखा, यो सुप्तुलुङको छेउमा बसौँ ।

रिनाखा : (सुप्तुलुङको छेउमा बस्दै) हुन्छ पापा ।

चक्का : (छुन्नालाई बोलाउँदै) लु मासुङ्मा[३४], तिमी पनि यतै आउ । भान्जा र बुसुनीमालाई साइतको टीका लगाइदिएर मावली रित गरिदिऊँ ।

---

३३. कपासमाथि भोर्लाको पातबाट बनाइएको स्त्री वस्त्र । यसको कमरमाथि सानो र कमरमुनि फुकेको हुन्छ । यसको घाँटीमा ठराइएको खुर्पाको आकृति अङ्कित हुन्छ ।

३४. स्वास्नी ।

छन्ना : हुन्छ पासुङ[35] । (सुप्तुलुङ मुसोको टीका लगाइदिन्छ ।)
चक्का : (सोलोन्वाले सुप्तुलुङलाई थोक्दाउँदै)
सोइ...
दिप्पाचोपाचो
दिमाचोमाचो
आइना केन छाआ
केन छावाआ
अकु खिमदो बुसुनिमा ए ताति
हेन साका इत्दानुम
हङलङ इत्दानुम
पुसङ इत्दानुम
महङने, मथङने
निमाचोङमा मेत्दानुम
आईदोकोङ अकु छाचिबो
कुरोङ थाप्सोङछे चिला
कुरोङ हिलिछे चिला कानेइ
हेनदोकोङ अकु छाचिछे
कप्पारुङ-कमारुङ पलिसाचि कानेइ ।[36]
दुवै जना : (हात नमस्कार गर्दै) जेऊ ।
(चक्काले अदुवालाई कर्दले काटेर कचुर हान्छ ।

---

३५. लोग्ने ।
३६. ल है पुर्खाहरू,
आज तपाईंहरूको छोराले
नातिले यो घरमा बुहारी पो ल्यायो ।
आबो तपाईंहरूको छोरा-बुहारीलाई
बल दिनुहोस्
शक्ति दिनुहोस्
आयु दिनुहोस्
यिनीहरूको सुव्यफाव्य होस्
आजदेखि यिनीहरूको ।
मावली रित सकियो है
रित छिन्यो
आजदेखि यिनीहरू पनि
बुढाबुढी भयौ है ।

पहिलोको कचुर पोटैपोट हुन्छ । बल्लबल्ल पछि चितपोट हुन्छ । तायामाले डबकामा रक्सी र थान कपडा र खियामाले डबकामा जाँड र फलफूलहरू ल्याएर हेत्छाकुप्पाको अगाडि राख्छन् ।)

चक्का : ल भान्जा, तपाईंहरूको मावली रित पनि सकियो । आबो तपाईंहरूलाई मावली रितको दोष लाग्दैन । तपाईंहरूलाई जाती हुन्छ । आजदेखि तपाईंहरू बुराबुरी हुनुभयो । आबो तपाईंहरू मिलेर जुनीजुनी जोबन काट्नू ।

हेत्छाकुप्पा : (ढोग्दै) आलाङ्ने[३७], चक्का-छन्ना ।

रिनाखा : (ढोग्दै) आलाङ्ने चक्का-छन्ना । (सबैले ताली बजाउँछन् ।)

छन्ना : (उठ्दै) लौ, आबो नानाहरूले भान्जालाई रङ्रिवा[३८] खुवाइदिनुहोस् ।

तायामा : (डबकाको रक्सी खुवाई दिँदै) ल छेन्वा, बुसुनीमा । यो रक्सी खाऊ । (दुवै हातमा थान कपडा दिँदै) अनि यो खाडीको कपडा । हाम्रो हातको सोभाउ । जाडो हुँदा लाउनू है ।

दुवै जना : (सामान लिँदै) आलाङ्ने नाना ।

खियामा : (डबकाको जाँड खुवाइदिँदै) ल छेन्वा, बुसुनीमा । यो जाँड खाऊ है । (पोल्टोबाट दुवै जनालाई बिनायो दिँदै) अनि यो बिनायो । हाम्रो हातको सोभाउ । कहिलेकाहीँ हाम्रो याद आयो भने यो बिनायो बजाउनू है ।

हेत्छाकुप्पा : आलाङ्ने नाना । (हेत्छाकुप्पा र रिनाखाले पैसा दिएर नानाहरूलाई खुट्टामा ढोगिदिन्छ । तायामा र खियामाले आपसलाई हेराहेर गर्छन् ।)

तायामा : (आफ्नो प्वाँख उखेलेर दिँदै) छेन्वा, यो तिम्रो विवाहमा

---

३७. नमस्कार, प्रणाम ।

३८. शुभसाइतको कोसेली ।

मैले तिमीलाई केही पनि दिनु सकिनँ । यो मेरो प्वाँख नै मेरोतर्फबाट साङ्चेप[३९] है ।

खियामा : (आफ्नो प्वाँख उखेलेर दिँदै) छेन्वा, मैले पनि तिम्रो विवाहमा केही पनि दिनु सकिनँ । मेरो तर्फबाट पनि यो मेरो प्वाँख नै साङ्चेप लिनू है ।

हेत्छाकुप्पा : (नानाहरूको आँसु पुछिदिँदै) आलाङ्ने नाना, आलाङ्ने । विवाहको शुभसाइतमा यसरी रुनु हुँदैन नि ! खुसी पो साटासाट गर्नुपर्छ । रमाइलो पो गर्नुपर्छ त ।

चक्का : (अगाडि बढ्दै) हो त नि, आबो यस्तो शुभसाइतको दिनमा ता यसरी रुनु हुँदैन नि ! बरु हाम्रो पुर्खाहरूको सेवा गर्नुपर्छ । वर्षौं दिनदेखिको दुःखलाई बिर्सिएर साकेला सिली[४०] टिपौँ है । (भित्ताको चोकेमा झुन्डिएको ढोल निकालेर बजाउँदै) लु आउनुहोस्, सिली टिप्नु । तपाईंहरू झ्याम्टा बजाउँदै सिली टिप्नुहोस् । म ढोल बजाउँदै सिली टिप्छु ।

हेत्छाकुप्पा : हवस् चक्का । (भित्ताको चोकेमा झुन्डिएको सिलिमी र पोमी निकालेर सिली टिप्दै) ल आउनुहोस् नाना, आउनुहोस्, सिली टिपौँ । तपाईंहरूको लागि पनि झ्याम्टाहरू खोपीमै छ ।

तायामा : हुन्छ, छेन्वा । (खोपीबाट झ्याम्टा निकाले बजाउँदै) खियामा, तिमी पनि खोपीबाट झ्याम्टा लिएर सिली टिप्नु आऊ । आज छेन्वाको विवाहमा सिली टिपेर रमाइलो गरौँ ।

खियामा : हुन्छ नाना । (खोपीबाट झ्याम्टा निकालेर बजाउँदै) म आएँ-आएँ । तपाईं सिली टिप्नुहोस् । म तपाईंलाई पछ्याउँछु ।

तायामा : (सिली टिप्दै) ल ल । आऊ, खियामा । म मोङ्छामा सिलीदेखि लिएर अहिलेसम्मको सबै सिली टिप्छु । तिमी मलाई पछ्याऊ है त ।

---

३९. मुन्दुमी विवाहमा घरमुलीको शिर उभ्याउनीस्वरूप अनिवार्य रूपमा गरिने सघाउनी पैसा ।

४०. मुन्दुमी नाच ।

खियामा : (सिली टिप्दै) लौ, लौ नाना ।

हेत्छाकुप्पा : (सबैलाई बोलाउँदै) ल, आउनुहोस्, आउनुहोस्, सबै जना । गोलो भएर सिली टिपौँ । (चक्काको नेतृत्वमा गोलबद्ध भएर सबै जनाले सिली टिप्छन् । केही छिनपछि तायामा र खियामा आपसमा हेराहेर गर्छन् । घेराबाट सुटुक्कै बाहिरिन्छन् । एक ठाउँमा उभिन्छन् । साकेलाको ताल बिस्तारै कम हुन्छ ।)

तायामा : (पसिना पुछ्दै) खियामा, हामी ता मान्छेको रूपबाट परिवर्तन गरेर तिमी खिवामा र म तायामा भएको छौँ । त्यसैले हेत्छाकुप्पाको विवाह रितमा धेरैबेर बस्नु हुँदैन । आबो हामी आ-आफ्नो ठाउँतिर फर्केर जानुपर्छ । यसरी धेरै बस्यो भने, हेत्छाकुप्पालाई अशुभ हुन्छ ।

खियामा : (पसिना पुछ्दै) हुन्छ नाना । धेरै बेरसम्म हेत्छाकुप्पाको विवाहमा बस्दा अशुभ हुन्छ भने हामी अहिले नै उडेर आ-आफ्नो ठाउँमा गएर कहिले फूल बनेर बास्ना छर्दै फुलिरहौँ, कहिले चरा भएर उडिरहौँ है त, नाना ।

तायामा : हुन्छ खियामा, त्यसो भए पहिलाझैँ तिमी गोवाबुङ भएर मिठो बास्ना छर्दै दक्षिणमा गएर बस । म लिम्चिङबुङ भएर मिठो बास्ना छर्दै उत्तरमा गएर बस्छु । बरु हामी वर्षमा एकपल्ट भेट गरौँ । दु:ख-सु:ख बाँडौँ । त्यसको लागि लाङ्कुचप्पा[४१] परेर तिम्रो आँसुबाट बनेको रावा र मेरो आँसुबाट बनेको तावा हुँदै म लिम्चिङबुङ भएर भेट्न आउँछु, तिमी गोवावुङ भएर पर्खिरहनू है । अनि, तिमी हामी भेट भएपछि हाम्रो दु:ख-सुख साटासाट गर्नुपर्छ ।

---

४१. वर्षादको अन्त्य र हिउँदको सुरूआतमा उत्तर र दक्षिणबाट झरी पर्दै एक ठाउँमा दुवै झरीको मेहोरो मिसिएर फेरि त्यो मेहोरो छुट्टिएर आ-आफ्नै ठाउँतिर गएर झरी रोकिन्छ । उत्तरबाट पर्ने झरीको मेहोरोलाई वाबुरिमा र दक्षिणबाट पर्ने झरीको मेहोरोलाई वालेम्सङमा भनिन्छ । यो दुवै झरीको मेहोरो एकै ठाउँ मिसिएर पर्ने झरीको मेहोरोलाई लाङ्कुचप्पा भनिन्छ ।

खियामा : हुन्छ नाना । (एक-आपसमा हेराहेर गर्छन् । साकेलाको धुन बिस्तारै बढ्छ । प्रकाश बिस्तारै विलय भएर पुनः उदय हुन्छ । हेत्छाकुप्पा रोकिएर यताउति हेर्छ । तायामा र खियामा आकाशमा उडिरहेका हुन्छन् ।)

हेत्छाकुप्पा : (आकाशतिर हेरेर अचम्म हुँदै) हँ, आकाशमा मेरो नानाहरू ! अचानक फेरि यो, मेरो नानाहरू किन चरा भएर आकाशमा उडिरहेको होला ?

रिनाखा : (हेत्छाकुप्पालाई समाउँदै) त्यै त पासुङ, अचानक हाम्रो नानाहरू किन आकाशमा उडिरहेको होला ? आबो कसरी त्यो नानाहरूलाई फर्काउनु नि !

हेत्छाकुप्पा : (एकछिन सोच्दै) रिनाखा, आबो यो हाम्रो नानाहरूलाई असाध्यै मनपर्ने माहादा, नुन र खोर्सानीलाई नाङ्लोमा राखेर दुईवटा चोकेको बिचमा बलो तेर्साएर मासु झुन्ड्याएर साकेला सिली टिप्दै बोलाउनुपर्छ । त्यो नाङ्लोमाथिको माहादा, नुन र खोर्सानी खानुको लागि लोभिएर नानाहरू फर्किनुहुन्छ । त्यतिखेर नानाहरूले सम्पन्नता पनि ल्याउनुहुन्छ । अनि यही पृथ्वीमा नानाहरूसँग हाम्रो भेट हुन्छ । बरु नानाहरू आउन्जेलसम्म बालाम[४२] गरिदिनुपर्छ । मेरो नानाहरू अवश्य पनि फर्किएर आउनुहुन्छ । (आदेश दिँदै) वापा र किप्पा, तिमीहरूले बलाम बनाऊ है । (भक्कानिएर पीडामा रुन्छ ।)

वापा/किप्पा : हुन्छ । (दुवैले बालाम बनाउँछ । दुईवटा चोके गाडेर एउटा बलो तेर्साउँछन् । त्यो बलोमा मासुको सिला झुन्ड्याउँछन् । त्यो बलोको मुनि नाङ्लोमा माहादा, नुन र खोर्सानी राख्छन् ।)

हेत्छाकुप्पा : (रोइसकेपछि आँसु पुच्छेर आक्रोशमा) म मामा-पापा नभएको टुहुरा हुँ । म नानाहरूले पनि माया मारेको

---

४२. मुन्दुमी विवाहमा साकेला सिलीसहित गरिने एक प्रकारको रीत ।



प्रवीण पुमाद्वारा लिखित/निर्देशित हेत्छाकुप्पा नाटकमा मिति २०६२।१०।२२ गते काठमाण्डौ स्थित नेपाल प्रज्ञा-प्रतिष्ठानमा अभिनय गर्दै युनाइटेड स्कूलका विद्यार्थीहरू ।

---

छेन्वा हुँ । म चक्रङदिमालाई पनि हराउने वीर हुँ । म वाहाङको छोरी रिनाखासँग विवाह गर्ने पुरुष हुँ । म आधुनिक घर बनाउने मान्छे हुँ । म मावलीबाट सुनैसुनको दरबार बक्सिस पाउने भान्जा हुँ । म दिलिबुङ र पातेसुङको एक्लो छोरा हुँ । म सात सय पचास वर्षभन्दा बढी आयु भएको हेत्छाकुप्पा हुँ । म हेत्छाकुप्पा हुँ । म हेत्छाकुप्पा हुँ । (फर्किएर आँसु पुच्छ । आकाशतिर ढोग्छ । हेत्छाकुप्पाको नेतृत्वमा सबै जनाले गोलो भएर सिली टिप्छन् । प्रकाश बिस्तारै विलयन हुन्छ । सबै आवाजहरू बिस्तारै विलय हुन्छ ।)

| क्र. स. | पात्रहरू | संवाद सारांश | | | | | | | | | | | | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | दृश्य-१ | दृश्य-२ | दृश्य-३ | दृश्य-४ | दृश्य-५ | दृश्य-६ | दृश्य-७ | दृश्य-८ | दृश्य-९ | दृश्य-१० | दृश्य-११ | दृश्य-१२ | |
| | दृश्य | तुवाचुङ | जंगल | तुवाचुङ | जंगल | कोसी | तुवाचुङ | तुवाचुङ | तुवाचुङ | तुवाचुङ | तुवाचुङ | तुवाचुङ | तुवाचुङ | |
| | स्थान | घर | जंगल | घर | ओडार | नदी | घर | घर | घर | घर | घर | घर | घर | |
| | समय | बेलुका | बिहान | दिउँसो | दिउँसो | बेलुका | दिउँसो | बिहान | दिउँसो | बेलुका | बेलुका | बिहान | बेलुका | |
| १. | हेत्छाकुप्पा | ८ | - | १७ | ८ | ५ | १६ | ११ | ८ | १६ | १७ | २७ | ४५ | १७८ |
| २. | तायामा | २३ | १४ | - | - | - | - | - | - | - | - | - | १६ | ५३ |
| ३. | खियामा | २३ | ६ | - | - | - | - | - | - | - | - | - | १२ | ४१ |
| ४. | साम्फेदिवा | - | ६ | - | - | - | - | - | - | - | - | - | - | ६ |
| ५. | चक्रङदिमा | - | - | १६ | १८ | ४ | - | - | - | - | - | - | - | ३८ |
| ६. | फोङमा | - | - | - | ९ | - | - | - | - | - | - | - | - | ९ |
| ७. | पक्का | - | - | - | ७ | - | - | - | - | - | - | - | - | ७ |
| ८. | निछा | - | - | - | ५ | - | - | - | - | - | - | - | - | ५ |
| ९. | साकुमा | - | - | - | - | - | १३ | ११ | ४ | ६ | - | ९ | - | ४३ |
| १०. | रिनाखा | - | - | - | - | - | १ | १ | ९ | ११ | २४ | २८ | २२ | ९६ |
| ११. | नानी | - | - | - | - | - | - | - | - | - | ९ | १ | - | १० |
| १२. | किप्पा | - | - | - | - | - | - | - | - | - | - | - | ९ | ९ |
| १३. | वापा | - | - | - | - | - | - | - | - | - | - | - | ९ | ९ |
| १४. | चक्का | - | - | - | - | - | - | - | - | - | - | - | १३ | १३ |
| १५. | छन्ना | - | - | - | - | - | - | - | - | - | - | - | ११ | ११ |
| १६. | खुन्पा | - | - | - | - | - | - | - | - | - | - | - | ३ | ३ |
| १७. | छिमेकीहरू | - | - | - | - | - | - | - | - | - | - | - | २ | २ |
| | जम्मा | ५४ | २६ | ३३ | ४७ | ९ | ३० | २३ | २१ | ३३ | ५० | ६५ | १४२ | ५३३ |

| क्र. स. | पात्रहरू | वेशभूषा | दृश्य-१ | दृश्य-२ | दृश्य-३ | दृश्य-४ | दृश्य-५ | दृश्य-६ | दृश्य-७ | दृश्य-८ | दृश्य-९ | दृश्य-१० | दृश्य-११ | दृश्य-१२ | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| १. | हेत्छाकुप्पा | सायाबुङ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| | | लोछुम | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| २. | तायामा | मेख्ली | १ | - | - | | - | - | - | - | - | - | - | १ | २ |
| | | मुजेत्रो | १ | - | - | १ | - | - | - | - | - | - | - | १ | २ |
| | | तावातित | १ | १ | - | १ | - | - | - | - | - | - | - | - | २ |
| ३. | खियामा | मेख्ली | १ | - | - | १ | - | - | - | - | - | - | - | १ | २ |
| | | मुजेत्रो | १ | - | - | १ | - | - | - | - | - | - | - | १ | २ |
| | | खिवातित | १ | १ | - | - | - | - | - | - | - | - | - | - | २ |
| ४. | साम्फेदिवा | साम्फेतित | - | १ | - | - | - | - | - | - | - | - | - | - | १ |
| ५. | चक्रङदिमा | मामोङतित | - | १ | १ | - | १ | - | - | - | - | - | - | - | ३ |
| ६. | फोङ्मा | मामोङतित | - | - | १ | - | - | - | - | - | - | - | - | - | १ |
| ७. | पक्का | हल्लातित | - | - | १ | - | - | - | - | - | - | - | - | - | १ |
| ८. | निछा | हल्लातित | - | - | १ | - | - | - | - | - | - | - | - | - | १ |
| ९. | रिनाखा | मेख्ली | - | - | - | - | - | १ | १ | १ | १ | १ | १ | १ | ७ |
| १०. | साकुमा | सुम्नितित | - | - | - | - | - | १ | १ | १ | १ | - | १ | - | ५ |
| ११. | छा | लोछुम | - | - | - | - | - | - | - | - | - | १ | १ | - | २ |
| १२. | किप्पा | किप्पातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १३. | वापा | वापातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १४. | चक्का | दोलो | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | | निनाम्तित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १५. | छुन्ना | हेन्खातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १६. | खुन्पा | लोछुम | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १७. | महिला छिमेकी | मेख्ली | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | पुरुष छिमेकी | सायाबुङ | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | | लोछुम | - | - | - | | - | - | - | - | - | - | - | १ | १ |
| | जम्मा | २३ | ८ | ६ | ६ | | ३ | ४ | ४ | ४ | ४ | ४ | ५ | १६ | ६४ |

| क्र.स. | पात्रहरू | गहना-१ | दृश्य-१ | दृश्य-२ | दृश्य-३ | दृश्य-४ | दृश्य-५ | दृश्य-६ | दृश्य-७ | दृश्य-८ | दृश्य-९ | दृश्य-१० | दृश्य-११ | दृश्य-१२ | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| १. | हेत्छाकुप्पा | सुनाखरीफुल | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | वाछिनारी | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | बुन्छत | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | जाबी | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | तालित | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | चिन्डो | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | खुकुरी | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| २. | तायामा | लिम्चिबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | नाबेकबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | नाबुकबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | साक्साबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | बिनायो | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | छिबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | बेरुबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | लोङबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| ३. | खियामा | गोवाबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | नाबेकबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | नाबुकबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | साक्साबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | बिनायो | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | छिबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | बेरुबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | लोङबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | जम्मा | २३ | २३ | २३ | ६ | | ६ | ६ | ६ | ६ | ६ | ६ | ६ | २ | ५९ |

| क्र. स. | पात्रहरू | गहना-२ | दृश्य-१ | दृश्य-२ | दृश्य-३ | दृश्य-४ | दृश्य-५ | दृश्य-६ | दृश्य-७ | दृश्य-८ | दृश्य-९ | दृश्य-१० | दृश्य-११ | दृश्य-१२ | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ४. | साम्फेदिवा | साम्फेकङ | - | - | - | - | - | - | - | - | - | - | - | - | - |
| ५. | चक्रङदिमा | मामोङतित | - | १ | १ | १ | १ | - | - | - | - | - | - | - | ३ |
| ६. | फोङ्मा | मामोङतित | - | - | १ | १ | - | - | - | - | - | - | - | - | १ |
| ७. | पक्का | हल्लातित | - | - | १ | १ | - | - | - | - | - | - | - | - | १ |
| ८. | निछा | हल्लातित | - | - | १ | १ | - | - | - | - | - | - | - | - | १ |
| ९. | रिनाखा | मेख्ली | - | - | - | - | - | १ | १ | १ | १ | १ | १ | १ | ७ |
| १०. | साकुमा | सुम्नितित | - | - | - | - | - | १ | १ | १ | १ | - | १ | - | ५ |
| ११. | छा | लोछुम | - | - | - | - | - | - | - | - | - | १ | १ | - | २ |
| १२. | किप्पा | किप्पातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १३. | वापा | वापातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १४. | चक्का | दोलो | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | | निनाम्तित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १५. | छन्ना | हेन्खातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १६. | खन्पा | लोछुम | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १७. | महिला छिमेकी | मेख्ली | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | पुरुष छिमेकी | सायाबुङ | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | | लोछुम | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | **गहना-२** | | | | | | | | | | | | | | |
| | **गहना-१** | | | | | | | | | | | | | | |
| | **जम्मा** | **२३** | **६** | **६** | **६** | **६** | **३** | **४** | **४** | **४** | **४** | **४** | **५** | **१४** | **६०** |

| क्र. स. | पात्रहरू | सामग्री-१ | दृश्य-१ | दृश्य-२ | दृश्य-३ | दृश्य-४ | दृश्य-५ | दृश्य-६ | दृश्य-७ | दृश्य-८ | दृश्य-९ | दृश्य-१० | दृश्य-११ | दृश्य-१२ | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| १. | हेत्छाकुप्पा | सुनाखरीफुल | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | वाछिनारी | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | बुन्छत | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | जाबी | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | तालित | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | चिन्डो | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| | | खुकुरी | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| २. | तायामा | लिम्चिबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | नाबेकबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | नाबुकबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | साक्साबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | बिनायो | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | छिबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | बेरुबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | लोङबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| ३. | खियामा | गोवाबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | नाबेकबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | नाबुकबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | साक्साबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | बिनायो | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | छिबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | बेरुबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | | लोङबुङ | १ | १ | - | - | - | - | - | - | - | - | - | १ | २ |
| | जम्मा | २३ | २३ | २३ | ६ | | ६ | ६ | ६ | ६ | ६ | ६ | ६ | २ | ५९ |

| क्र. स. | पात्रहरू | सामग्री-२ | दृश्य-१ | दृश्य-२ | दृश्य-३ | दृश्य-४ | दृश्य-५ | दृश्य-६ | दृश्य-७ | दृश्य-८ | दृश्य-९ | दृश्य-१० | दृश्य-११ | दृश्य-१२ | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ४. | साम्फेदिवा | साम्फेकङ | - | - | - | - | - | - | - | - | - | - | - | - | - |
| ५. | चक्रङदिमा | मामोङतित | - | १ | १ | १ | १ | - | - | - | - | - | - | - | ३ |
| ६. | फोङ्मा | मामोङतित | - | - | १ | १ | - | - | - | - | - | - | - | - | १ |
| ८. | पक्का | हल्लातित | - | - | १ | १ | - | - | - | - | - | - | - | - | १ |
| ९. | निछा | हल्लातित | - | - | १ | १ | - | - | - | - | - | - | - | - | १ |
| ९. | रिनाखा | मेख्ली | - | - | - | - | - | १ | १ | १ | १ | १ | १ | १ | ७ |
| ११. | साक्मा | सुम्नितित | - | - | - | - | - | १ | १ | १ | १ | - | १ | - | ५ |
| १२. | नानी | लोछुम | - | - | - | - | - | - | - | - | - | १ | १ | - | २ |
| १३. | किप्पा | किप्पातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १५. | वापा | वापातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १४. | चक्का | दोलो | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | | निनाम्तित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १५. | छन्ना | हेन्खातित | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १६. | खुन्पा | लोछुम | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| १७. | महिला छिमेकी | मेख्ली | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | पुरुष छिमेकी | सायाबुङ | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | | लोछुम | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | सामग्री-२ | २३ | ६ | ६ | ६ | ६ | ३ | ४ | ४ | ४ | ४ | ४ | ५ | १४ | ६० |
| | सामग्री-१ | | | | | | | | | | | | | | |
| | जम्मा | | | | | | | | | | | | | | |

| क्र.स. | ध्वानी | दृश्य-१ | दृश्य-२ | दृश्य-३ | दृश्य-४ | दृश्य-५ | दृश्य-६ | दृश्य-७ | दृश्य-८ | दृश्य-९ | दृश्य-१० | दृश्य-११ | दृश्य-१२ | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | स्थान | घर | जंगल | घर | ओडार | नदी | घर | घर | घर | घर | घर | घर | घर | |
| | समय | बेलुका | बिहान | दिउँसो | दिउँसो | बेलुका | दिउँसो | बिहान | दिउँसो | बेलुका | बेलुका | बिहान | बेलुका | |
| १. | समुन्द्र | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| २. | हावा | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| ३. | चराहरू | १ | – | १ | – | १ | १ | १ | १ | १ | १ | १ | १ | १० |
| ४. | ओडार | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| ५. | सुसेली | १ | १ | १ | १ | – | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| ६. | पानी पिएको | १ | १ | १ | – | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| ७. | साकेला यात्रा | १ | १ | १ | – | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| ८. | रमाइलो | १ | १ | १ | – | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| ९. | अचम्म | १ | १ | १ | – | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| १०. | साकेला नृत्य | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| ११. | राती | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १२. | बिहान | २ | – | २ | – | – | २ | २ | २ | २ | २ | २ | २ | २४ |
| १३. | चट्याङ | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १४. | आँधी-हुरी | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १५. | उराठ | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १६. | रिसिया | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १७. | पोखरी | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १८. | हिउँ परेको | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १९. | पानी परेको | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| २०. | कोङकोङमा | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| २१. | दुखद | १ | – | १ | – | – | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| २२. | बच्चा | – | १ | – | – | – | – | – | – | – | – | – | – | १ |
| २३. | तान बुनेको | – | – | – | – | – | – | – | – | – | – | – | १ | १ |
| | | – | – | – | – | – | – | – | – | – | – | – | १ | १ |
| | जम्मा | ५४ | २६ | ३३ | ४७ | ९ | ३० | २३ | २१ | ३३ | ५० | ६५ | १४२ | ५३३ |

| क्र. स. | समय, दृश्य र दृश्याकन | दृश्य-१ | दृश्य-२ | दृश्य-३ | दृश्य-४ | दृश्य-५ | दृश्य-६ | दृश्य-७ | दृश्य-८ | दृश्य-९ | दृश्य-१० | दृश्य-११ | दृश्य-१२ | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | स्थान | घर | जंगल | घर | ओडार | नदी | घर | घर | घर | घर | घर | घर | घर | |
| | समय | बेलुका | बिहान | दिउँसो | दिउँसो | बेलुका | दिउँसो | बिहान | दिउँसो | बेलुका | बेलुका | बिहान | बेलुका | |
| १. | हिमाल | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| २. | तुवाचुङ | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| ३. | योङवामा | १ | - | १ | - | १ | १ | १ | १ | १ | १ | १ | १ | १० |
| ४. | जंगल | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | १२ |
| ५. | ओडार | १ | १ | १ | १ | - | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| ६. | वाहिबुङ | १ | १ | १ | - | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| ७. | बाँसघारी | १ | १ | १ | - | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| ८. | भोर्लाघारी | १ | १ | १ | - | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| ९. | कोराघारी | १ | १ | १ | - | १ | १ | १ | १ | १ | १ | १ | १ | ११ |
| १०. | सुम्निकेन | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| ११. | पारुकेन | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १२. | सिलिमी | २ | - | २ | - | - | २ | २ | २ | २ | २ | २ | २ | १८ |
| १३. | पोमी | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १४. | तालित | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १५. | बाँसको लिङ्गो | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १६. | चर्खा | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १७. | तान | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १८. | सुप्तलुङ | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| १९. | आगो | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| २०. | धुवा | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| २०. | चिहान | १ | - | १ | - | - | १ | १ | १ | १ | १ | १ | १ | ९ |
| २१. | सुकेको रुख | - | १ | - | - | - | - | - | - | - | - | - | - | १ |
| २२. | सुनको दरबार | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| २३. | बालाम | - | - | - | - | - | - | - | - | - | - | - | १ | १ |
| | जम्मा | २० | ७ | २१ | २ | ६ | २० | २० | २० | २० | २० | २० | २२ | १९७ |



## प्रवीण पुमा


जन्म मिति : २०३५/१२/०७
जन्म स्थान : जन्तेढुङ्गा-५, पाथीभारा, खोटाङ, नेपाल
शिक्षा : एम.ए.(त्रि.वि.)/एमम.फिल. (अंग्रेजी, पो.वि.)
इमेल : sumnimatheatre@gmail.com


### १. सम्प्रति सेवा:

उप-प्राध्यापक (२०७५ देखि हालसम्म)
क्याम्पस प्रमुख (२०७५ देखि २०७९ सम्म)
सिनास क्याम्पस, काठमाण्डौ, नेपाल।

### २. प्रमूख कृतिहरू:

२.१. **सुम्निमा** (नाटकसङ्ग्रह-२०५३)
२.२. **हेन्खामा-निनाम्मा** (मिथकसङ्ग्रह-२०५४)
२.३. **दोङवाङ-दोङदापा** (संस्कृति-२०६१)
२.४. **सुम्निमा** (चलचित्र-२०६२)
२.५. **सुम्निमा-पारुहाङ** (नाटकसङ्ग्रह-२०६५)
२.६. **हेत्छाकुप्पा** (नाट्यकृति-२०६६)
२.७. **निनाम्मा** (नाटकसङ्ग्रह-२०६७)
२.८. **साया** (नाटकसङ्ग्रह-२०६९)
२.९. **होङछा** (नाटकसङ्ग्रह-२०७१)
२.१०. **बुढाहोङ मुन्दुमः परिचय, पाठ र विश्लेषण** (२०७२, आजउराप्र, नेपाल सरकार)
२.११. **पारुसेवा मुन्दुमः परिचय, पाठ र विश्लेषण** (२०७४, आजउराप्र, नेपाल सरकार)
२.१२. **स्मृति** (नाट्यकृति-२०८०)

### ३. उपाधि/सम्मान

३.१. **सर्वोत्कृट अभिनेता-२०५५** (सुथिए)
३.२. **सर्वोत्कृट निर्देशक-२०५६** (सुथिए)
३.३. **उत्कृट नाट्यप्रस्तुति तेस्रो स्थान-२०५९** (सांस्कृतिक संस्थान, नेपाल सरकार)
३.४. **उत्कृठ नवप्रतिभा सम्मान-२०५९** (कि.रा.वि.स., नेपाल)
३.५. **क्षेत्रीय प्रतिभा पुरस्कार-२०७४** (नेपाल सरकार, संस्कृति, नागरिक तथा पर्यटन मन्त्रालय)
३.६. **सर्वोत्कृष्ठ चलचित्र लेखक-२०७४** (आदिवासी चलचित्र महोत्सव, अमेरिका)
३.७. **जुपिटर सम्मान-२०७४** (जुपिटर टोल सुधार समिति, ललितपुर)
३.८. **भिमु सम्मान-२०७५** (भिमुमेमोरियल ट्रष्ट, काठमाण्डौ, नेपाल)
३.९. **चलचित्र सम्मान-२०७६** (कि.रा.च.स., नेपाल)

---

### प्रा. डा. सञ्जीव उप्रेती

प्रवीण पुमाको नाटक हेत्छकुप्पा किरात संस्कृतिको उत्कृष्ट प्रस्तुति हो। नाटकले पौराणिक हेत्छाकुप्पाको कथालाई पुनर्निर्माण गर्दछ, जसलाई उनका चेलीहरू तायामा र खियामाले मरेका सम्झिएका थिए। जे होस्, हेत्छाकुप्पा एक दुष्ट महिला राक्षस चक्रड्दिमाको पासोबाट जोगिएर मात्र बाँच्न र समृद्धि मात्र गर्दैन, सुन्दरी रिनाखासँग विवाह पनि गर्दछ। आफ्नो बच्चाको मृत्युपछि जवान दम्पतीहरू शोकले अभिभूत हुन्छन्, तर सांस्कृतिक अनुष्ठान गरेर नयाँ सुरुवात गर्छन्, जसको अन्त्यमा तिनीहरू पनि एकताबद्ध हुन्छन्, कम्तीमा अस्थायी रूपमा, हेत्छाकुप्पाका लामो समयदेखि हराएकी चेलीहरू तायामा र खियामासँग नाटकको कथानकले किरात समुदायको लय र सांस्कृतिक रीतिरिवाजलाई राम्रोसँग प्रतिनिधित्व गर्दछ र स्थानीय शब्दहरूको प्रयोगले नेपालको पूर्वी पहाडको भौगोलिक र सांस्कृतिक विशिष्टतालाई सही रूपमा पुननिर्माण गर्दछ। पुमाले हेत्छाकुप्पाको पुरानो कथालाई नाटकीय कथामा रूपान्तरण गर्न सफल भएको छ। किरात संस्कृतिमा रुचि राख्ने सबैका लागि पुमाको पाठमा स्थानीय वाक्यांश, भनाई, कथा र मौखिक परम्पराहरूको प्रामाणिक प्रतिनिधित्वको सन्दर्भमा धेरै कुराहरू छन्। यस नाटकको कथानक कडाईका साथ बुनिएको छ र संवादहरू पनि चुस्त र राम्रोसँग लेखिएका छन्।




सुम्निमा थिएटर एकेडेमी
ललितपुर-१४, जुपिटरटोल, नेपाल | Tel.: 941245548
E-mail: sumnimatheatre@gmail.com





हेत्छाकुप्पा (नाट्यकृति)
प्रवीण पुमा